## पौरखी कुलपुरुष

# हीरानाथ र सन्तानहरू


लेखक

**पद्मनाथ शर्मा**

सम्पादक

**गोपीकृष्ण शर्मा**

सम्पादन सहयोगी

**उमानाथ शर्मा**
**दुर्गाराज शर्मा**
**भूपनाथ शर्मा**
**कमला खनाल**
**हरिकृष्ण शर्मा**

कृति : पौरखी कुलपुरुष हीरानाथ र सन्तानहरू

लेखक : पद्मनाथ शर्मा

प्रकाशक : गोपीकृष्ण शर्मा एवं गौतम परिवार



संस्करण : प्रथम २०७७, विजया दशमी

प्रकाशित प्रति : १००१

मूल्य : रु. १०१।-

कम्प्यूटर सेटिङ : दीपेन्द्र बस्नेत

मुद्रण : सूर्योदय छापाखाना, हाडीगाउँ, काठमाडौं

ISBN : 978-9937-0-7756-9

# प्राक्कथन

मानवजीवनमा माता, पिता र गुरु विशेष पूजनीय हुन्छन् । जन्म दिने माता-पिताको र सद् विद्या प्रदान गर्ने गुरुको स्नेह-सम्बन्ध र सत्मार्गको प्रदर्शनले मनुष्यको जुनि धन्य धन्य बनेको हुन्छ । त्यसैले वैदिक आर्ष महावाक्यमा माता, पिता र गुरुलाई जीवित देवताको रूपमा सम्मान गरिएको छ : मातृदेवो भव, पितृदेवो भव, आचार्यदेवो भव । बुवा-आमाले आफ्ना सन्तानको सुरक्षा गर्न, भरण-पोषण गर्न र साथै सन्ततिलाई राम्रो शिक्षा दिएर असल मानव बनाउन विशेष ध्यान दिएका हुन्छन् । यस अर्थमा बुवा पनि आदि गुरु हुन् र आमा चाहिँ आदि शिक्षिका । दुवैमा गुरुको गरिमा रहेको हुन्छ । यस कारण माता-पिता वन्दनीय छन् , पूजनीय छन् र सदा स्मरणीय छन् । यस परिप्रेक्ष्यमा हाम्रा अग्रज बुवा-आमाले गरे-देखाएको पौरख र हामी सन्ततिलाई शिक्षित-दीक्षित र उन्नतिशील बनाउन गर्नुभएको उच्च योगदानबारे प्रत्यक्ष देखे-भोगेको र थाहा पाएको सम्झनालाई संक्षिप्त रूपमा लिपिबद्ध गरेर जीवन्त राखौं साथै भावी पुस्ताले पनि आफ्ना अग्रजबारे जानकारी पाऊन् भन्ने उद्देश्यले यो बुबा-आमाको व्यक्ति वृत्तान्त वा जीवन यात्रा यहाँ उल्लेख गरेको हुँ ।

पिता हीरानाथ शर्मा गौतम १० वर्षको उमेरमा खाली हात गुल्मी चन्द्रकोटबाट पाल्पा, तानसेन, गैरागाउँमा आउनुभएको हो । तराई-मधेसमा सिरवारी गर्ने, साहेबज्यूकहाँ नोकरी गर्ने र आवश्यकता परेमा गाउँघरमा पौरोहित्य सेवा पनि गर्ने कर्मण्यता अँगालेर बुबाले यस क्षेत्रमा घरजग्गा जोड्नुभयो र यतै स्थायी बसोबास हुँदै गयो । आफ्ना सन्तानलाई पनि अन्य ठाउँमा पठाएर शिक्षित तुल्याउनुभयो । यसै गरी आमा कान्ता देवीले घर गृहस्थी सम्हालेर गार्हस्थ्य जीवन सार्थक पार्नुभयो । १०४ वर्ष बाँचेर पारिवारिक जिम्मेवारी सुखद रूपले सम्पन्न गर्नुभएका बुवाको संक्षिप्त पारिवारिक जीवनी यहाँ प्रस्तुत गरेको छु । यस कार्यमा छोरा-भतिजा-भतिजीहरू गोपीकृष्ण, उमानाथ, दुर्गाराज, भूपनाथ, कमला र हरिकृष्णको तर्फबाट प्राप्त भएको सम्पादन सहयोग प्रति स्नेहपूर्ण आभार व्यक्त गर्दछु । छोरा विष्णुले र भतिजा चक्रपाणिले पनि कृतिगत सरसल्लाहमा सघाउ पुऱ्याएका छन् । अन्तिम तयारीमा कम्प्युटर अक्षराङ्कन गर्ने नाति रामचन्द्र र ढाँचा मिलाउन सहयोग पुऱ्याउने नाति श्रीकृष्ण दुवै धन्यवादका पात्र छन् । यसरी तीन पुस्ताको आत्मीय सहकार्य यहाँ जुटेको छ ।

लेखनमा खास गरी तथ्यगत त्रुटि नहोस् भनेर विशेष सावधानी अँगालिएको छ । यति हुँदाहुँदै पनि कतै केही कमी कमजोरी भएमा वा छुट भएमा आफ्नो कपिमा सच्याइ राख्न र हामीलाई संशोधनका लागि समयमै जानकारी गराउन पनि विशेष अनुरोध गर्दछु । प्रकाशनका सन्दर्भमा ले आउट गरिदिने दीपेन्द्र बस्नेतलाई र मुद्रणकार्य सम्पन्न गराइदिने सूर्योदय छापाखाना, काठमाडौंका प्रोप्राइटर हरिबहादुर कार्कीलाई धन्यवाद ।

२०७७ भाद्र २४ बुधवार

पद्‌मनाथ शर्मा
९४ औं वर्ष प्रवेश शुभ जन्मोत्सव
तानसेन १, गैरागाउँ, पाल्पा
प्रदेश नं. ५

## सम्पादकीय

आफ्ना पिता-पुर्खाबारे अभिलेख तयार पारेर भावी पुस्ताका लागि समेत स्मृति आलेख राखिदिने यो पुरानै परम्परा हो । हाम्रा पूज्य बुवा/कान्छो बुवा पद्‌मनाथ शर्माले पहिले देखि नै र खास गरी ९० वर्षको उमेरपार गरेपछि यस कार्यका लागि कलम चलाउनु भएको थियो । प्रत्यक्ष देखे-बेहोरेका र कुराकानीबाट थाहा भएका पितापुर्खाका जीवन यात्रा, घटना विवरण र दुःख सुखका घुम्ती-मोडहरू बारे उहाँले कपीमा समय-समयमा टिपोट गर्दै रहनुभयो । दुई-तीन कपीहरूमा यस्ता विवरण लेखिएका पनि छन् । बेलाबखत दर्शन भेट हुँदामा र विशेष गरेर २०७६ सालको दसैंमा सबैजसो छोरा-भतिजाहरूसँगको शुभ स्नेह मिलन हुँदा बुवाले यो पुर्ख्यौली विवरणलाई किताबको रूपमा प्रकाशनमा ल्याउने चाहना दर्शाउनुभयो । यो कार्य हामी सबै परिवार जनलाई पनि सौभाग्यको कुरा हो । हामीले बुवाले गरेका टिपोट र विवरण कृतिका रूपमा उपस्थापन गरेका छौं । यसमा आएका यावत् कुरा र विवरणहरू सबै बुवा पद्‌मनाथकै हुन्, हामीले त संयोजन मात्र गरेका हौं ।

अहिले पूज्य बुवा पद्‌मनाथ शर्मा गौतम ९४ वर्षको उमेरमा श्रीमती नेत्रकुमारीका साथ सन्तोष र शान्तिसँग सपरिवार जीवन यापन गर्दै हुनुहुन्छ । हजुरबुवा हीरानाथ १०४ वर्षसम्म रहनुभयो, उहाँकै यात्रापथमा बुवा पद्‌मनाथ पनि अगाडि बढ्दै हुनुहुन्छ । यस शुभ अवसरमा पद्‌मनाथ बुवाको समय-समयको टिपोट र अभिलेखनलाई उहाँकै चाहना अनुसार कृतिका रूपमा उपस्थापन गरेर मूर्त रूप दिने काम मात्र हामीले गरेका हौं । यो उहाँकै सम्पत्ति हो र उहाँमा नै समर्पण गर्दछौं : त्वदीयं वस्तु गोविन्द तुभ्यमेव समर्पितम् ।

# आरम्भ

श्रीगणेशाय नमः । श्रीसरस्वत्यै नमः । श्रीकुलदेवतायै नमः ।

सर्वप्रथम शुभमङ्गलकर्ता, शिवपार्वतीपुत्र, विघ्नविनाशक श्रीगणेशमा भक्तिपूर्वक प्रणाम गर्दछु । साथै प्रातः स्मरणीय पूज्य पिता-माता प्रति म पुत्र पद्मनाथ शर्मा गौतम श्रद्धाभावका साथ शिर नुहाई स्नेह-स्मरण गर्दछु । पूज्य पिता हीरानाथ शर्मा गौतमले आफ्नो जीवनकाल (वि.सं.१९३३-२०३७) मा धार्मिक कृत्यका साथै समाजसेवा र पारिवारिक भरण-पोषण तथा उन्नयनका लागि जेजस्तो पवित्र कार्य गर्नुभयो त्यो पौरख मलाई सम्म भोगेको र सुनेको आधारबाट केही थाहा होला तर म पछिका कुल वंशका पुस्ता दरपुस्तालाई भने गहकिलो स्रोतको अभावमा त्यति थाहा हुनेछैन । आफ्ना पुर्खाबारे जानकारी राख्न को चाहँदैन र ? उनीहरूलाई पनि आफ्ना पिता-पुर्खा र अग्रजबारे जानकारी होस् र शुभ कार्य गर्न सत् प्रेरणा प्राप्त होस् भन्ने मनसुवाले यो पुर्खाको जीवनी र पारिवारिक बेलीविस्तार संक्षेपमा भए पनि लेख्ने काम गरेको छु ।

नाम चलेका पौरखी महापुरुषहरूको जीवनी कतिपय आफैले लेखेका छन्, र कतिपय जीवनी अरू व्यक्तिबाट पनि लेखिएका छन् । अहिले पनि त्यस खालका प्रेरणाप्रद जीवनीहरू खोजी-खोजी पढिएका देखिन्छन् । सङ्घर्षपूर्ण जीवन, त्याग र सेवाभाव तथा कर्तव्य पालनका लागि यो जीवनी पनि केही हदसम्म प्रेरणादायी हुनेछ भन्ने मैले सम्झेको छु । जहाँ सम्म श्रद्धेय दाजुहरूको कुरा छ, उहाँहरूबारे धेरथोर मलाई पनि जानकारी भएकै हो र केही अपुग कुरा आवश्यक भएका बखत भाइ-भतिजाहरूबाट सहयोग लिएर पनि लेख्ने काम गरेको छु ।

पूज्य पिता हीरानाथको मोटामोटी जीवनी यहाँ दिइएको छ र उहाँका सन्तानहरूका पनि संक्षिप्त जीवनीहरू शीर्षक-शीर्षक नै राखेर यहाँ उल्लेख गरिएका छन् । यो लेखन कार्य अग्रज पुर्खा प्रति गरिएको सेवा हो र खास गरी हाम्रो कुलबंशका लागि बढी उपयोगी हुनेछ भन्ने मैले सोचेको छु ।

जीवनी लेखन चानचुने कुरा होइन । यो निकै गहन र खोजपूर्ण अभिलेखन हो । कतिपय विवरण आफ्नै आँखाले देखे-भोगेका र कतिपय चाँहि स्वयं पात्रले भनेका र जानकार तथा सरोकारवाला व्यक्तिले बताएका कुरालाई जीवनी लेखनको आधार बनाउनुपर्ने हुन्छ । यसो गर्दा पनि कहिले काहीं राम्रा कुरा ओझेलमा पर्न सक्छन् अथवा छुटेका पनि हुन सक्छन् । त्यसतर्फ पनि विशेष चनाखो बन्नुपर्ने हुन्छ । यस्तो जोखिम हुँदाहुँदै पनि आफ्ना पुर्खा बारे मोटामोटी भए पनि जानकारी दिन हामी सन्ततिले कलम चलाउनै पर्थ्यो र त्यही काम गर्न मैले सानो प्रयास गरेको हुँ ।

पिता हीरानाथ हाम्रा पौरखी कुलपुरुष हुनुहुन्छ । सानै उमेरमा जन्मस्थानबाट उहाँले एक्लै आएर सफल गृहस्थी जीवन सम्हाल्नुभयो, हीराजस्तै चमकदार बन्नुभयो र सन्तानलाई पनि जुन हीरा तुल्य सम्पन्न तथा वैभवशाली तुल्याउनुभयो, त्यो अवश्य नै उदाहरणीय र प्रशंसनीय छ । यस लेखनमा मूलतः बुवा हीरानाथकै बारेमा र संक्षेपमा उहाँका सन्ततिहरूको बारेमा पनि मोटामोटी जानकारी होस् भन्ने उद्देश्यले मैले सानो बुद्धिले अभिलेखन गरेको हुँ ।

# हीरानाथ शर्मा गौतम

अत्रि गोत्रीय गौतम (गोतामे) थरका श्रीवल्लभको बसोबास गुल्मी जिल्लाको चन्द्रकोट भीरखानी भन्ने गाउँमा थियो । पिता पुनाराम र माता तिलोत्तमाका एकमात्र छोरा हुन् - श्रीवल्लभ । श्रीवल्लभका पुर्खाहरू रुकुमको गोताम कोटबाट बाग्लुङ हुँदै गुल्मी आएका थिए । यी गौतम वंशका कुलदेवता मस्ट वराह हुन् र इष्ट देवता चाहिँ देवी हुन् । चन्द्रकोटमा कुलदेवता पूजा हुने गरेकोमा वंश विस्तार भए पछि पाल्पामा पनि प्रति दुई-दुई वर्षमा २०३६ सालदेखि कुलदेवता पूजा हुने गरेको छ । गौतमहरूको सात्विक कुलपूजा हुन्छ र पायस र पुवाद्वारा विधिवत् कुलपूजा र हवन हुन्छ । घण्ट चढाइन्छ । पशुवलि दिने प्रथा छैन । गुल्मीको चन्द्रकोटमा, जुहाङमा र थोर्गामा पनि गौतमहरू छन् ।

श्रीवल्लभका तीन छोरा भए - जेठा गजाधर, माहिला हीरानाथ र कान्छा दण्डपाणि । जेठा गजाधर गौतम चन्द्रकोटमा नै बसे । माहिला हीरानाथ गौतम पाल्पामा बसाईं सरे भने कान्छा दण्डपाणि गौतम चाहिँ चन्द्रकोटमा नै बसे र अल्पायुमा स्वर्ग भए पछि उनका छोरा भक्तिराम गौतम पनि बुवा हीरानाथको साथ लागि पाल्पामा बसाइँ सरे ।

श्रीवल्लभका माहिला छोरा हीरानाथ हाम्रा जनयिता पिता हुनुहुन्छ । पिता श्रीवल्लभ र माता सावित्रा देवीबाट माहिला सन्तानका रूपमा वि.सं. १९३३ साल कार्तिक अमावास्या, तिहारे औंसीका दिन हीरानाथ बुवाको जन्म भएको हो । उहाँले घरैमा श्रीवल्लभबाट साधारण लेखपढ र रुद्री चण्डी पाठ गर्ने सामान्य शिक्षा प्राप्त गर्नुभएको थियो । बुवा हीरानाथको उपनयन व्रतबन्ध संस्कार पनि त्यहीँ भयो र पिता श्रीवल्लभबाट गायत्री दीक्षा मन्त्र पनि प्राप्त गर्नु भयो । पाल्पामा बसाइँ सरेपछि पनि त्यही अध्ययनका आधारमा बुवाले बेलामौकामा पौरोहित्य कार्य गर्नु परेको थियो । पाल्पा, तानसेन गैरागाउँलाई मूल थलो बनाएर बुवा हीरानाथले कहिले मधेस तराई, कहिले तानसेन नीलो दरबार र कहिले पाल्पा माडी कुन्सरे हुँदै र उत्तरार्द्धमा गैरागाउँमा नै बसेर जीवन बिताउनु भएको थियो । सात सन्तानका पिता हीरानाथले पितृऋणको अथवा पिताले सन्तान प्रति गर्नुपर्ने दायित्वको कुशलता साथ निर्वाह गर्नुभयो । यसका लागि हामी सन्ततिहरु उहाँ प्रति चिर ऋणी छौँ र नतमस्तक भएर सश्रद्ध आभार व्यक्त गर्दछौं ।

बुवा हीरानाथ सानैदेखि केही काम गर्नुपर्छ भन्ने हिम्मत राख्नुहुन्थ्यो । गाउँघरका युवाहरू पनि कामका लागि साथै रोजगारीका लागि बाहिरफेर कतै गएको उहाँले देख्नुभएकै थियो । धेरै उमेर भएको थिएन । १० वर्षको मात्र हुनुहुन्थ्यो, बुवा हीरानाथ १९४३ सालमा पाल्पा आउजाउ गर्ने छरछिमेकका मानिसहरूसँगै मिलेर चन्द्रकोटबाट उहाँ पनि पाल्पातर्फ प्रस्थान गर्नुभयो ।

राणाहरूको जहानिया शासनका त्यस समयमा प्रशासन संयन्त्रलाई सर्वसुलभ र सहज बनाउने उद्देश्यले पाल्पा तहसिल अड्डा अन्तर्गत छिमेकी जिल्लाहरू पनि राखिएका थिए । पाल्पाको मूल प्रशासन एकाइलाई पाल्पा गौंडा भनिन्थ्यो । सानातिना प्रशासनिक काम सम्बन्धित जिल्लाले गरे पनि पाल्पा, गुल्मी र बाग्लुङका प्रमुख जङ्गी र अदालती मुद्दा मामिला जस्ता कामहरू पाल्पा गौंडाले हेर्ने गर्दथ्यो । यो क्रम पछि २००९ साल सम्म कायमै रहयो । त्यसो हुनाले गुल्मी चन्द्रकोटका मानिसहरू पनि अड्डा अदालतको काममा पाल्पामा धाउनु पर्दथ्यो । यस कारण पनि बुवा हीरानाथलाई पाल्पामा आउने इच्छा जागेको हुनुपर्छ ।

त्यतिखेर पाल्पा, तानसेन अन्तर्गत गैरागाउँमा फुपू बज्यैको घर थियो । पाल्पा पनि हेरौं र फुपू बज्यै सित पनि भेट गरौं भन्ने मनसायले बुवा हीरानाथ कलिलै उमेरमा पाल्पा आउनुभएको हो । दश-बाह्र दिन फुपू बज्यै कहाँ बसेपछि अब चन्द्रकोट फर्कनु पर्‍यो भनेर बिदा माग्नु भयो । फुपू बज्यै भने बुवालाई यहीँ राख्न चाहनु हुन्थ्यो । सम्झाउँदै भन्नुभयो - "बाबु, तिमी घर नजाऊ । तिमी अब यहीँ बस । तिमीलाई म यहीँ पढाइदिन्छु । ठुला बडासँग सम्पर्क पनि हुन्छ ।" यसरी आग्रह अनुसार बुवा हीरानाथ फुपू बज्यैको सेवा समेत गर्ने गरी फुपू बज्यै कहाँ बस्न थाल्नुभएको थियो । वरपर पण्डितहरूसँग सम्पर्क राखेर केही शिक्षा पनि हासिल गर्न थाल्नुभयो । एक प्रकारले बुवाको पाल्पा बसाइ लम्बिने जग बस्यो ।

पन्ध्र-सोह्र वर्षको उमेर थियो, त्यति खेरको प्रचलन अनुसार बुवा हीरानाथको विवाह कर्म गर्न ढिला भइसकेको थियो । बुवा औंसीमा जन्मेको हुनाले औंसीमा नै जन्म भएकी कन्यासँग विवाह गर्नु दुवैका लागि राम्रो हुने ज्योतिष धारणा पनि थियो नै । सम्भव भए सम्म चारैतिर खोज्दै र बुझ्दै जाँदा गुल्मी लिम्घामा औंसीमा जन्मेकी कन्या छन् भन्ने थाहा भयो । पाल्पा चन्द्रकोट आउजाउ गर्दा लिम्घा गाउँ बाटोमै पर्दथ्यो । बुवा हीरानाथ कन्याको खोजीमा सोही गाउँ लिम्घा पुग्नुभयो र कन्याकै घरमा वास बस्नुभयो । बुवाले आफ्नो परिचय दिनुभयो र औंसीमा जन्मेकी कन्यासँग विवाह गर्ने माग गर्नुभयो । कन्यापक्षले पनि त्यस्तै वर खोजेकै थिए । आफ्नो घरमा खोजे अनुसारको योग्य वर पाउँदा खुसी भए । लग्न ठम्याएर शुभ मुहूर्तमा दुवैको विवाह पनि भयो ।

विवाहित कन्याको नाम कान्तादेवी हो । १९४० साल कार्तिक कृष्ण पक्षकै अमावास्यामा कान्ता देवीको पनि जन्म भएको रहेछ । दश वर्षकी हुँदा कान्ताको विवाह हीरानाथसँग भएको थियो । अब फुपू बज्यैको घरमा बुवा हीरानाथ श्रीमती कान्तादेवीसँग बस्न थाल्नुभयो । आमा कान्तादेवीबाट पनि फुपू बज्यैको विशेष स्याहार सुसार भयो । फुपू बज्यै १०८ वर्षसम्म बाँच्नुभयो । १०४ वर्ष पछि फुपू बज्यै उठ्नै नसक्ने गरी विस्तरामा थला पर्नुभयो । त्यस बखत आमा कान्तादेवीले विशेष स्याहार सुसार गर्नु परेको थियो । निकै पछि सम्म पनि आमाले त्यो कुरा हामीसँग गरिरहनुहुन्थ्यो ।

गैरागाउँमा बसोबास भएका चतुर्भुज खनालले तानसेन नीलो दरबारमा पाल्पाका साहेबज्यू कहाँ नोकरी गरेका थिए । उनीसँग बुवाको पनि सङ्गत हुने नै भयो । चतुर्भुजले नै जोडबल गरेर बुवालाई १९५३ सालतिर उनै पाल्पा साहेबज्यूको मधेश तराईको रानीगन्ज मौजामा खेतीपातीको रेखदेख गर्ने सिरवारीको काम गर्न लगाइदिए । पाँच- छ वर्षसम्म बुवा हीरानाथले सिरवारी काम गर्नुभयो । मधेशमा केही जग्गा पनि जोड्नुभयो । पछि पाल्पामा नै बस्न थाले पछि मधेशको जग्गा समेत बेचेर य़तै जग्गा जमिन थप्नुभएको थियो ।

मधेश रोगाहा ठाउँ । प्रायः मानिसहरू बस्न चाहँदैन थिए । जमिनदारहरू पनि हिउँदमा जगा आयस्ता उठती पुठती गर्ने बेलामा मुस्किलले एक-दुई महिना बस्थे । कतिपय जमिनदारहरू भने सिरवारकै जिम्मा छाडिदिन्थे । मधेशमा निकै उखरमाउलो गर्मी हुने, बेलाबखत अउलको ज्वरोले थला पार्ने । बुवा भने धेरैजसो मधेशमा नै बस्नुभयो । खेती लगाए पछि बिदा लिएर एक डेढ महिना जति पाल्पामा आउनुहुन्थ्यो नत्र मधेशमा नै बस्नुपरेको थियो । यस्तैमा वि.स. १९५८ सालतिर बुवा रानीगञ्ज मौजामा निकै बिरामी हुनुभयो । यता गैरागाउँ फुपू बज्यैको हेरचाह गरेर बसेकी आमा कान्तादेवीले बिरामी भएको खबर पाएर आफै मधेश रानीगञ्ज जानुभयो । मानिस लगाई बोकाएर बुवालाई पाल्पामा

ल्याउनुभयो । पाल्पामा ओखती मूलो गरेर आराम भयो र बुवा त्यसपछि मधेश मौजामा जानुभएन । पछि बुढा साहेबज्यूले आफ्नै नीलो दरबारमा महिनाको तलब रु. २ (दुई) पाउने गरी जागिरमा लगाए । सेवा निकै कडा थियो । बिहान उज्यालो चढ्दै गर्दा सबेरै नीलो दरबार पुग्नुपर्थ्यो । दिनभर साथै बस्नुपर्थ्यो र बेलुकी साहेबज्यूले ज्यूनार गरेपछि अबेर राती घरमा फर्कन पाइन्थ्यो । गैरागाउँ घरबाट नीलो दरबार त्यति टाढा थिएन । १०/१२ मिनेटमा नै पैदल आउजाउ हुन्थ्यो । बुवाले साहेबज्यूको दरबारमा त्यो नोकरी दुई-तीन वर्षमात्र गर्नुभयो । पछि त्यो काम छाडेर खेतीपाती तर्फ लाग्नुभयो ।

बुवा हीरानाथले माडी कुन्सरे भन्ने ठाउँमा ३५ रोपनी जति पाखो बारी र घर समेत किन्नुभयो । हरुवा समेत राखेर खेती किसानी हुन्थ्यो र केही खेत समेत जोड्नुभयो । कुन्सरेमा पनि बुवा केही वर्ष बस्नुभएको थियो । घोडा पालिएको थियो र गैरागाउँ आउजाउ गर्न समेत घोडाले सजिलो गराएको थियो ।

हीरानाथ र कान्तादेवीबाट हामी पाँच भाइ छोराहरू जन्मेका हौं । हामी जन्मनुभन्दा पहिले दुई छोरी जन्मेका थिए । जेठी छोरी जन्मेकै केही महिनामा बितिन् भने अर्की छोरी चाहिँ जन्मेको दुई-तीन वर्षमा बितेकी थिइन् । त्यसपछि मात्र ठुलो दाजु रुद्रनाथको जन्म वि.सं. १९६५ सालमा गैरागाउँमा भएको हो । तत् पश्चात् तीन-चार वर्षको फरक गरेर माहिला दाजु कुलराज, साहिंला दाजु दीनानाथ, काहिंला दाजु रामनाथ र सर्वान्तमा १९८४ सालमा कान्छो भाइका रूपमा म पद्मनाथको पाल्या गैरागाउँमा नै जन्म भएको हो । बुवाले छोराहरूलाई घरैमा साधारण शिक्षा दिएर काठमाडौंतर्फ पठाउनुभयो । ठुलदाइ र माहिलदाइ काठमाडौं जानुभएको थियो भने साहिंलो दाइ चाहिँ संस्कृत शिक्षाकै लागि मटिहानी जानुभएको थियो । यसरी छोराहरू पनि शिक्षा हासिल गर्न सचेत देखिएका थिए ।

केही वर्ष पहिलेको कुरा हो, बुवाका तीन भाइ छोराहरू जन्मिसकेका थिए र घर व्यवहार पनि राम्रो सँग चलेकै थियो । यसै बखत बुवाको पुरानो ठाउँ गुल्मी चन्द्रकोटबाट दुःखद खबर आयो - "कान्छो भाइ दण्डपाणिको अल्पायुमा नै देहावसान भयो तुरुन्त आउनू" भनेर । टाढाको कुरा । भाइको मृत्यु भएको छ, जसरी पनि बुवाले जानु पर्ने भयो । पाल्पाबाट पैदल तीन दिन हिंडेर बुवा हीरानाथ चन्द्रकोट पुग्नुभयो । ९ वर्ष जतिको छोरा भक्तिराम अन्त्येष्टि काज क्रियामा बसेको थियो । आशौच भित्रको स्नान, अञ्जली र पिण्डदानको क्रिया पनि चलेकै थियो । यसै बखत दश दिन भित्र नै ढिकुरो पनि नफुट्दै भाइ दण्डपाणिकी श्रीमतीको पनि देहान्त भयो । जुठो माथि जुठो खप्टियो । जस्तो आइपरे पनि पार लगाउनै पऱ्यो । २०/२२ दिन लगाएर काजक्रिया सकियो । शुद्ध शान्तिको कार्य पछि बुवा हीरानाथ पाल्पातर्फ फर्कन लाग्नुभयो । त्यसै बखतमा भतिजा भक्तिराम बुवाको पछि लाग्दै माहिलो बुवासँग म पनि पाल्पा जान्छु भन्नुभएछ । बुवालाई पनि माया-स्नेह लाग्यो । छाड्न सक्नु भएन । साथैमा भतिजा भक्तिरामलाई लिएर पाल्पा आउनुभएको थियो । एक-दुई महिना पछि चन्द्रकोट फर्कन्छ कि भनेर सोध्दा भतिजाले फर्कने मन गरेन र बुवाले शिक्षा दीक्षा दिलाएर सँगै राख्नुभयो । हामी पाँच भाइ थियौं अब छ भाइ भयौं ।

छोराहरूको बिहेबारी हुँदै थियो । संयुक्त परिवारको आकार बढ्ने क्रम थियो । बसिरहेको घरमा अटाउने स्थिति रहेन । गैरागाउँमा नै अर्को घर किन्ने कुरा अगाडि बढ्यो । यस्तैमा तला थपेको, खरको छानो भएको, ढुङ्गा माटोले बनेको घर फेला पऱ्यो । त्यो घर तीन-तीन पटक अपुताली परेको रहेछ । त्यसो हुनाले पनि नबिकेर रहेको थियो । बुवा हीरानाथले भने पूजा-पाठ र शान्तिस्वस्ति गरौंला भनी आँट

गरेर त्यो घर १९८२ सालमा किन्नुभयो । सँगैको ५ रोपनी जति जग्गा पनि । पूजा-पाठ र हवन शान्ति स्वस्ति पनि भयो । घर यस परिवारका लागि फापिलो बन्न पुग्यो । वंशविस्तार र उन्नति पनि त्यही घरबाट हुँदै रह्यो । अहिले ठुलो छोरा हरिकृष्णको त्यो लच्छिनको घर कायमै राखौं भन्ने आग्रह अनुसार पनि पछि ओसारो गाँसेको र जस्ता पाताले छाएको त्यो घर पुरानै अवस्थामा छँदै छ । अहिले सम्म पनि म सपरिवार त्यसै घरमा बस्दै रहेको छु । ढुङ्गा-माटो र काठले बनेको घर निकै मजबुत हुँदो रहेछ जसले ९० सालको भूकम्प बेहोऱ्यो र धेरै पछि २०७२ सालको महाभूकम्पलाई पनि परास्त गरेर आफ्नो पहिचान कायम राखेको छ ।

गैरागाउँको यही पुर्खौली घरमा वि.सं. १९८४ साल भाद्र २४ गतेका दिन मेरो जन्म भएको हो । दाजुहरूका साथ म यसै घरमा हुर्के-बढेको हुँ । धेरैजसो पढाइ यतै र शिक्षण पेसा पनि यतै । त्यस घरको पारिवारिक जीवन मेलमिलापपूर्ण र आदर्श थियो । संयुक्त परिवारको बसोबास भएको नमुना थियो त्यो घर ।

बुवा हीरानाथले यस बीच आफ्नो पौरखले निकै सम्पत्तिको जोहों गर्नुभयो । ढाप र ओडारेको पाखो बारी, ओडारेकै खेत, जामुनेमा खेत, गोर्खेकोटमा पाखो बारी आदि बुवाले नै जोड्नुभएको थियो । पढाइका क्रममा दाजु भक्तिरामले पर्वत जिल्लाको पाङमा गएर केही ज्योतिष विद्याको अध्ययन गर्नुभयो । त्यसैले ठूलो साहिल दाजु भक्तिरामलाई ज्योतिषी दाजु पनि भन्ने गरेका हौं । मैले भने वि.सं. २००२ सालतिर काठमाडौं गएर स्कूलको शिक्षा लिन सुरु गरेको थिएँ ; पछि २००४ सालमा तानसेन अमरगञ्ज पौवामा पद्मोदय हाइस्कूल स्थापना भएपछि यतै आएर ६ क्लासमा भर्ना भई प्रवेशिका सम्मको पढाइ पूरा गरेको हुँ ।

संयुक्त परिवार सधैं कायम रहँदैन । व्यक्तिगत उन्नतिका लागि पनि परिवार विभाजित हुने गरेको छ । घरमूली पिता वा अभिभावकले पनि अंश बन्डा गरेर संयुक्त परिवारलाई छुट्ट्याउने गरेका छन् । हाम्रा परिवारका सदस्यहरूको पनि छुट्टी भिन्न हुने प्रक्रिया सुरु हुन थाल्यो । सर्वप्रथम ज्योतिषी साइलदाजु भक्तिरामले छुट्टिने कुरा ल्याउनुभयो । बुवाले पनि जो भएको जग्गा जमिन सम्पत्ति ६ भाइका लागि भनेर ६ भाग लगाउनुभयो । आफ्नो लागि अंश भाग राख्नु भएन । दाजु भक्तिराम ढापको पाखो बारी र ओडारेको खेत लिएर छुट्टि भिन्न हुनुभयो । यो क्रम रोकिएन । वि.सं. २००५ सालमा अरू दाजुभाइ पनि परस्पर छुट्टी भिन्न हुने काम भयो । अंश भाग लगाइएकै थियो । बुवा-आमाले आफ्नो अंश भाग राख्नुभएको थिएन । बसोबासका लागि मात्र भनेर घरको आधा हिस्सा आफ्नो नाममा राख्नुभयो भने बाँकी आधा भाग छोराहरूलाई बाड्दिनु भयो । केही जग्गा समेत आधा घरको मूल्य रु. ५०० (पाँच सय) कायम गरेर छोराहरूले सकार्ने र छाड्ने काम भएको थियो ।

जग्गा जमिनको अंशबन्डा लगाउने सन्दर्भमा परिवारका सबै सदस्य बसेर सरसल्लाह गरी यसरी अंशभाग मिलाइएको थियो । पाखो बारीतर्फ जेठा र कान्छा छोरालाई गोर्खेकोटको पाखो बारी, माहिला, साहिला र काहिलालाई ओडारेको पाखो बारी, अंशभागमा मिलाइएको थियो । घरघडेरीतर्फ जेठा, माहिला र साहिंलालाई पल्लो बारी अनि काहिंला र कान्छालाई घर सँगैको बारी अंशभागमा मिलाइयो । यसै गरी खेततर्फ जेठा, साहिंला र कान्छालाई माडीको खेत तथा माहिला र काहिंलालाई जामुनेको खेत परेको थियो । यो जानकारी हाम्रो नाति पनाति पुस्ताहरूलाई निकै सुखद अतीतको सम्झना हुनेछ भनेर पनि यहाँ उल्लेख गरेको हुँ ।

बुवा-आमाले अंशभाग लिनुभएको थिएन । हामी पाँच भाइ छोराहरूले समय मिलाएर पालैपालो सेवा-शुश्रूषा र पालन-पोषण गर्नुपर्ने स्थिति देखा पर्‍यो । बुवा-आमाले घर छाडेर अन्यत्र बस्न जाने कुरा पनि भएन । त्यसो हुनाले मेरो चाहना अनुसार पनि म कान्छो छोरा पद्मनाथसँगै बस्ने र पाँचै भाइले वार्षिक रूपमा तोकिएको परिमाणमा धानबाली र केही नगद राशि समेतबाट जीवन सञ्चालनको व्यवस्था मिलाइयो । यता छुट्टी भिन्न भए पनि हामी सबै भाइका बीच राम्रो मेलमिलाप थियो । बेला-बखत भेट भएर सरसल्लाह पनि हुने गरेको थियो । हामी कसैलाई दुःख आपत पर्‍यो भने हामी जुटेका हुन्थ्यौं मिलेर सहयोग गर्दथ्यौं ।

बुवा हीरानाथको आचरण-व्यवहार धार्मिक प्रकृतिको थियो । दैनिक नित्य पूजा-पाठ गरेपछि सारस्वर सहित वेद मन्त्रको पाठ गर्नुहुन्थ्यो । सेवाको भाव थियो । परोपकारमा सरिक हुनुहुन्थ्यो । हामी सबै छोरा भतिजा प्रति उत्तिकै स्नेह र माया गर्नुहुन्थ्यो । बुवाले जीवन कालमा धेरै धार्मिक कृत्य र अनुष्ठानहरू गर्नुभएको थियो । आफ्नै घरमा तीन-तीन पटक श्रीमद्भागवत सप्ताह महायज्ञ लगाउनु भयो । गायत्री पुरश्चरण अनुष्ठान गर्नुभयो । धार्मिक कार्यहरूमा हामी सबै छोराहरू मिलेर सहयोग पुर्‍याएका थियौं । चाहना अनुसारको धार्मिक कार्यहरूमा कुनै प्रकारको कमी हुन पाएन ।

बुवाले गरेका धार्मिक अनुष्ठानमध्ये एउटा निकै उल्लेखनीय कार्य हो हरिनाम संकीर्तन । जसरी सत्य युगमा विष्णु भगवान् प्रति गरिने ध्यानको महत्व छ, त्रेता युगमा यज्ञ-यागादिको महत्व छ र द्वापर युगमा पूजा-पाठको महत्व छ ; त्यसरी नै कलियुगमा हरिकीर्तनको महत्व हुन्छ भन्ने शास्त्रीय वचन पनि छ । शास्त्रीय मान्यता अनुसार कलितारण मन्त्र हो - "हरे राम हरे राम राम राम हरे हरे । हरे कृष्ण हरे कृष्ण कृष्ण कृष्ण हरे हरे ।" यस मन्त्रलाई जपसङ्ख्या राखेर साढे तीन करोड आवृत्ति पुर्‍याएपछि मानिस सिद्ध पुरुष बन्छ र स्वस्थता, शान्ति तथा दीर्घायुष्य प्राप्त हुन्छन् । यसका लागि कुनै समय निर्धारण छैन । बिहान जागेपछि बेलुकी राती शयन नगर्दासम्म नित्य क्रियाबाट फुर्सद मिल्नासाथ जतिबेला पनि यो हरिकीर्तन अनुष्ठान गरिने प्रावधान छ । बुवाले विधिवत् सङ्कल्प गरेर हरिसङ्कीर्तन थालनी गर्नुभयो । हातमा गौमुखी आवरण हुन्थ्यो र त्यसभित्र माला । बस्दा, हिड्दा, मान्छे भेट्न आउँदा होस् जति बेला पनि हातमा माला हुन्थ्यो । बुवालाई स्थानीयले गौमुखी हीरु बाजे पनि भन्ने गरेका थिए । हरेक दिनको मन्त्र जाप सङ्ख्या टिपोट गर्नुहुन्थ्यो । लगभग चार वर्षसम्म लगातार कलितारण मन्त्र जाप गरेर साढे तीन करोड सङ्ख्या पुर्‍याई अन्तमा विधिवत् साङ्गता अनुष्ठान २०१० सालमा सम्पन्न गर्नुभयो । यसैको परिणाम हो हामीले बुवालाई लामो समयसम्म सेवा गर्न पायौं । यसै क्रममा बुवाले सहस्र चन्द्रदर्शन साङ्गता र चौरासी सिद्ध पूजा पनि २०१७ सालमा सम्पन्न गर्नुभयो । बुवा १०४ वर्षको उमेरमा २०३७ सालमा स्वर्गे हुनुभयो ।



आमा कान्तादेवीमा पनि धार्मिक भावना थियो र बुवाले सम्पन्न गर्ने हरेक धार्मिक कृत्यमा आमाले साथ दिनु हुन्थ्यो । पतिसेवा र सन्ततिस्नेहको दायित्व पनि उहाँले राम्रोसँग निर्वाह गर्नुभयो ।

छोरा-बुहारी, नाति-नातिना सबैले न्यानो माया र अपनत्व पाएका थिए । छुट्टी भिन्न भए पछि पनि आमा-बुवा मसँगै बस्नुभएको थियो र हामी छोरा-बुहारीले बुवा-आमाको आवासीय सेवा-शुश्रूषा पनि गरेकै थियौं । बुवा स्वस्थ हुनुहुन्थ्यो र आमालाई भने बेला-बखत रोगले सताउँथ्यो । पथ परहेज, सेवा र औषधिले काम गर्थ्यो । छुट्टी भिन्न भएका अरू छोरा-बुहारीबाट पनि बेला-मौकामा बुवा-आमाको सेवा र हेरचाह गर्ने काम समेत कायमै थियो ।

प्रवेशिका पास गरेपछि आफैले पढेको पद्मोदय हाइस्कूल पाल्पामा मैले २०११ सालदेखि पढाउने काम गर्दै थिएँ । २०२० साल कार्तिक महिनामा मलाई स्कूलबाट कृषि तालिम लिनका लागि काठमाडौं पठाउने पत्र आयो । आमा केही अस्वस्थ हुनुहुन्थ्यो । मैले आमालाई भनें कि हजुरले हुन्छ जा भने देखि कृषि तालिम लिन काठमाडौं जान्छु नत्र जान्नँ । आमाले कति महिनाको हो त्यो तालिम भनेर सोध्नुभयो । मैले ६ महिनाको तालिम हो त्यो पनि हजुरले पठाए जान्छु नत्र भने यहीं सेवा गरेर बस्छु काठमाडौं तालिममा जान्नँ भनें । आमाले भन्नुभयो - "म रोगी यस्तै हो, मलाई अहिले केही हुँदैन, काठमाडौं गएर तालिम पूरा गरेर आइज" । आमाको वचन पाएपछि म स्कूलबाट पठाइने कृषि तालिम लिन काठमाडौं जान्छु भनेर खबर पठाएँ । काठमाडौं जाने तयारी हुँदै थियो, त्यसको दुई दिन पछि म स्कूल जान लागेको बखतमा फेरि आमाले मलाई बोलाउनुभयो र भन्नुभयो - "माथिबाट मलाई खबर आयो अबको चार दिनमा म जाने हुँ । त्यसैले यस पल्ट काठमाडौं तालिममा न जा, हुँगीबाट ठूलदाजुलाई पनि खबर गरेर तुरुन्तै बोलाउने काम गर् अरू दाजुहरूलाई पनि यो खबर भनिदे । मलाई समयमा नै रानीघाट काली गण्डकी छेउ पुऱ्याओ" । चमत्कार भयो । आमाले आफ्नो मृत्युदिवस आफै घोषणा गर्नुभयो । यता मैले पनि स्कूलमा पुगेर सबै कुरा बताइदिएँ र तालिममा गइनँ । मौकैमा सबै दाजुभाइ जम्मा भयौँ । कविराज कौस्तुभमान वैद्य कहाँ गएर मैले प्राणेश्वर आयुर्वेदीय औषधि तीन मात्रा ल्याएँ ।

त्यसको पर्सिपल्ट भरिया बन्दोबस्त गरेर आमालाई मिसन हस्पिटलबाट मागी ल्याएको स्ट्रेचरमा राखी रानीघाट लैजाने तयारी हुँदै थियो, अचानक त्यस बेला आमा बेहोस हुनुभयो । हामीले आमालाई आगनको तुलसी मैरामा सार्‍यौं । एक मात्रा प्राणेश्वर औषधि महसित खुवाउने काम पनि भयो । घरका सबैले पालैपालो शालिग्राम र तुलसीको जल खुवाउने काम पनि भयो । यस्तैमा एकाएक आमाको होस खुल्यो । सबैतिर हेरेर भन्नुभयो - "मलाई अहिले किन तुलसी मैरामा सारेको ? म अहिले जाने होइन, भोली मात्र जाने हो । त्यसैले यहीबाट मलाई रानीघाटतर्फ लैजाने काम गर । आज राती सम्म रानीघाट पुऱ्याओ ।" बडो आश्चर्य लाग्यो । गोर्खेकोट द्यौरालीमा पुऱ्यायौं, औषधि खुवायौं, त्यसपछि अउलमा पुऱ्यायौं त्यहाँ पनि प्राणेश्वर खुवायौं र साँझपख आमालाई रानीघाट काली गण्डकी छेउ पुऱ्यायौं । त्यस बखत आमाले यताउति हेर्नुभयो र भन्नुभयो - मलाई अहिले कालीतीर घाटमा ल्याएछौ, म जाने आज होइन, भोलि बिहान हो । त्यसैले माथि सामाकोटेकहाँ लैजाओ भन्नुभयो । रातभर निदाउनुभएन । हामी पनि जागा बस्यौं । सामाकोटे कहाँ पुगे पछि आमाले भन्नुभयो कि दाजुहरू गीता भागवत पाठ गर्छन्, तैंले कानैमा आएर रामनाम जपिदे । आमाले भने बमोजिम पाठ र रामनाम जप्ने काम भइरहयो ।

भोलिपल्ट बिहान आमा मूर्छा पर्न थाल्नुभयो । हामीले तुरुन्त आमालाई घाटमा पुऱ्यायौं र काली गण्डकीको तीरमा अर्धजलमा राखी सुतायौं । कृष्णा गण्डकीकै जल खुवायौं । तीन पटकसम्म हिक्क हिक्क गर्नुभयो । अर्धजलमा राखेको एक डेढ घन्टापछि भागवत पाठ बिच आमाको प्राण गयो, आमा परमधाम

जानुभयो । नदी किनारमा चिता तयार भयो । सबै भाइले दागबत्ती दियौं, प्रदक्षिणा गऱ्यौं र राम्रोसँग विधिपूर्वक सतगत गरेर हामी घर फर्केका थियौं । यसरी आमा माथिबाट बोलाएकै दिन महाप्रस्थान गर्नुभयो ।

आमाले रानीघाट पुगेको दिनलाई नलिएर किन भोलि पल्ट अर्को दिनमा आफू माथि जाने भन्नुभएको होला ? यस कुराको रहस्य के होला भन्ने लागि रहेको थियो । घाटबाट फर्केको भोलिपल्ट धुवाघाट बस्ने विद्वान् पं. शोभाकर खनाल आएका थिए । उनैसँग यो कुरा गर्दा उनले पात्रो हेरे र भने - "रानीघाट पुगेको दिन कार्तिक कृष्ण अमावास्या रहेछ र क्षय मासको अन्तिम दिन पनि परेको रहेछ । त्यस दिनलाई हटाएर अर्को दिन मार्ग शुक्ल प्रतिपदामा आमा कान्तादेवीको देहावसान भएको रहेछ ।" रहस्य पत्ता लाग्यो । शुभ दिन, बिहानको शुभ समय पारेर आमाले महाप्रयाण गर्नुभएको रहेछ ।

आमा कान्तादेवीले आफ्नो असी वर्षको जीवनकाल (१९४०-२०२०) मा आदर्श गृहिणीको सेवामय जीवन बिताउनु भयो । गुल्मी, लिम्घामा जन्मेर १० वर्षकै उमेरमा विवाहित भई पाल्पा गैरागाउँमा बुवासँगै आएकी आमाले घरको चाँजोपाँजो मिलाउनु भयो, जागिरको क्रममा र खेतीपातीकै लागि पनि बुवा अन्यत्र गएको बखतमा आदर्श गृहिणीको रूपमा घर सम्हाल्ने दायित्व निर्वाह गर्नुभयो र दुःख-बिमार परेको बखतमा पनि बुवाको हेरचाह गरेर पतिसेवाको नमुना प्रस्तुत गर्नुभयो । गृहस्थी जीवनमा कुनै कमी हुन पाएन । यस क्रममा १०८ वर्षसम्म बाँचेकी फुपू बज्यैको अन्तिम चार वर्षसम्म निकै बिरामी भएर उठ-बस समेत गर्न नसकेको अवस्थामा आमाले नै विशेष सेवा-टहल गरेर अग्रज सेवाको उदाहरण प्रस्तुत गर्नुभएको थियो । त्यसैको प्रतिफल स्वरूप आमाले असी वसन्त देख्न पाउनुभयो भने बुवा चाहिँ १०४ वर्षसम्म बाँचेर हामीलाई शुभ आशिष प्रदान गर्दै रहनुभयो । आमा कान्तादेवीले आफ्ना सात सन्तान (दुई छोरी र पाँच छोरा) को रेखदेख र पालन-पोषण गर्नुभएको हो । दुर्भाग्यको कुरा, आरम्भमा जन्मेका दुई छोरीहरू दुई-तीन वर्षभित्रै कालकवलित भए । पुत्रीशोकको गहन पीडा सहेर पनि आमाले आफ्ना अरू पाँच सन्तानलाई हेर्ने र हुर्काउने काम गर्नुभयो । पछि देवर-देवरानी (दण्डपाणि र श्रीमती) को अल्पायुमा नै देहावसान भएपछि चन्द्रकोटदेखि बुवासँगै आएका भतिजा भक्तिरामलाई मातृ वात्सल्यको न्यानो छहारी दिएर ६ भाइ छोराको अभिभावकत्व निर्वाह गर्नुभयो । आमाको पालना र स्नेह-वात्सल्यले गर्दा हामी सन्ततिको दिनप्रतिदिन उत्तरोत्तर विस्तार, समृद्धि र विकास हुँदै गएको छ भन्नुमा कुनै अतिशयोक्ति हुँदैन । सय वर्ष पुग्दै गर्दादेखि बुवामा नयाँ दाँत उम्रन थालेको, आँखामा पावर फर्केको र कपाल कालो हुँदै गएको देखियो ।

प्रातः स्मरणीय बुवा हीरानाथको १०४ वर्षको जीवनकाल (१९३३-२०३७) निकै गौरवशाली र आदर्श रहयो । उहाँ १० वर्षकै उमेरमा जन्मस्थान गुल्मी चन्द्रकोटबाट आँट र हिम्मत लिएर खाली हात, एकल, पाल्पामा आउनुभएको हो । आफ्नै पौरखले जग्गा जमिन जोड्नुभयो, साहेबज्यूको नीलो दरबारमा नोकरी गर्नुभयो, मधेसमा सिरवारी गर्नुभयो, माडीमा खेती किसानी गर्नुभयो र आफ्ना सन्ततिको शिक्षा-दीक्षामा विशेष चासो राख्नुभयो । यसै गरी गैरागाउँ खाती तथा खड्का समाजमा आवश्यक परेको बखतमा पौरोहित्य कार्य पनि गर्नुभएको थियो । उहाँकै सन्तान हामी केहीले त्यस धार्मिक सेवा कर्मलाई निरन्तरता दिएका छौं, अब भने त्यो विच्छिन्न हुने क्रम देखिएको छ । बुवाले घरमा र पछि गोर्खेकोटमा पनि स्थानीय केटाकेटीहरूलाई साक्षर तुल्याउन 'ठूलो वर्णमाला' पढाउने काम पनि गर्नुभएको थियो ।

'ठूलो वर्णमाला' निकै चल्तीको किताब हो र हामीले पनि सुरुमा त्यही पढेका थियौं । बुवाको बुढेस कालमा जिउमा सेतो दुबीको छाप थियो र बस्दा हात खुट्टा काम्ने बानी थियो । यो कुनै रोग थिएन । बुवा स्वस्थ नै रहनुभयो ।

बुवाले निकै धार्मिक कृत्य गर्नुभयो । सप्ताह लगाउनु भयो, गायत्री पुरश्चरण गर्नुभयो र हरिनाथ सङ्कीर्तन गरेर साङ्गता समेत गर्नुभयो । आमालाई साथमा राखेर चौरासी सिद्धपूजा पनि सम्पन्न भएको थियो ।

यस सन्दर्भमा एउटा सम्झना यहाँ उल्लेख गर्न चाहान्छु । २०३६ सालमा नेपाल अधिराज्यभर "बहुदलीय शासन व्यवस्था कि सुधारिएको निर्दलीय पञ्चायती व्यवस्था" भन्ने शीर्षकमा जनमतसङ्ग्रह भएको थियो । बुवाको आँखा धमिलो थियो र स्पष्ट देख्न हम्मेहम्मे पर्दथ्यो । लट्ठीको सहारामा हिड्ने गर्नुहुन्थ्यो । भुसलडाँडा चउरमा भोटिङ बुथ थियो । बुवाले भोट दिन बुथकै कर्मचारी साथ जानुभयो । गोप्य मत दिने बेलामा बिस्तारै सोधियो पहेलो (निर्दल) कि नीलो (बहुदल) भनेर । बुवाले सबैले सुन्ने गरी भन्नुभयो - 'राजाको पार्टीमा भोट दिन्छु ।' यसरी स्पष्ट बक्ता हुनुहुन्थ्यो बुवा । अन्ततः निर्दल पञ्चायतकै विजय भयो ।

बुवा हीरानाथले आफ्नो जीवनकालमा खास गरी उत्तरार्धतिर पारिवारिक विरह-वेदना सहनुपरेको थियो । बुवाले पहिले पुत्रीशोक बेहोर्नु पऱ्यो । सानैमा ती दुई छोरी बितेका थिए । सन्ततिविरहको पीडा मत्थर हुँदै थियो, यस्तैमा २००७ सालमा काहिंला छोरा रामनाथको निधन भयो । दुई छोरी जन्मेका थिए, काहिली बुहारी विधवा भइन् । उनीहरूलाई बुवाले विशेष संरक्षण दिनुभयो । पारिवारिक विरहको क्रम रोकिएन । २०२० सालमा धर्मपत्नी कान्तादेवीको देहावसान भयो । पत्नी वियोगको असहच पीडामा रहनुपऱ्यो । कान्छा छोरा-बुहारीको सेवा-स्याहारमा दिनहरू बित्दै गए । यस्तैमा २०३६ साल मार्ग महिनामा साहिला छोरा दीनानाथको काशीमरण भयो । लगत्तै जस्तो २०३६ साल फाल्गुनमा हुँगी गण्डकी तटमा जेठा छोरा रुद्रनाथको देहावसान भयो । एकै वर्ष दुई-दुई छोराका देहावसानले बुवालाई मर्माहत तुल्यायो । २०३७ साल लागेदेखि नै बुवा बिरामी पर्नुभयो । हामीले खास गरी आयुर्वेदिक औषधिको सेवन गरायौं । असौजदेखि उहाँलाई बेथाले गाल्दै लग्यो । दुई महिना थलिएर २०३७ साल कार्तिक कृष्ण अमावास्यामा जन्मेकै महिना तथा तिथि पारेर बुवाले अन्तिम श्वास फेर्दै हुनुहुन्थ्यो, हामीले उहाँलाई घर आगनको तुलसी मैरामा गोबरले लिपपोत गरेर कुशासनमा पुऱ्यायौं । माइलदाजु समेत हामी सबैले शालग्राम र तुलसीको जल तथा बद्री-काशीबाट ल्याएको गङ्गा जल पालैपालो गरी खुवायौं । उहाँले १०४ वर्षको उमेरमा देह त्याग गर्नुभयो । बुवा परमधाम जानुभयो । गाउँका र बजारतिरका श्रद्धालु मानिसहरू भेला भए । सबै मिलेर बुवाको पार्थिव शरीरलाई रानीघाट पुऱ्यायौं । हामी कुलराज र पद्मनाथ दुई भाइले दागबत्ती दियौं । काली गण्डकी तीरमा चितामा पार्थिव शरीर राखियो र विधिपूर्वक सतगत भयो । हामी सबै स्नान गरेर खास गरी दुई भाइ छोराले क्षौर कर्म, अञ्जलिदान र पवित्र वस्त्र पहिरेर पैदल खाली खुट्टा घरमा आयौं र अन्त्येष्टि काज क्रिया विधिवत् सम्पन्न गऱ्यौं । एउटा युग अस्तायो । हीरा तुल्य हीरानाथको जीवन यात्राले विश्राम लियो र कीर्तिशेष रहचो ।

# रुद्रनाथ शर्मा

जेठो दाजु रुद्रनाथ शर्मा गौतमको जन्म वि.सं. १९६५ साल ज्येष्ठ २ गते, वैशाख शुक्लपक्ष नृसिंह चतुर्दशीका शुभ दिनमा पिता हीरानाथ र माता कान्तादेवीबाट पाल्पा गैरागाउँमा भएको थियो । प्रारम्भिक अध्ययन उहाँले घरैमा बुवासँग गर्नुभयो । १५/१६ वर्षको हुँदा दाजु रुद्रनाथ संस्कृत अध्ययनका लागि काठमाडौं जानुभयो र त्यहाँ संस्कृत व्याकरण विषयमा सम्पूर्ण मध्यमा परीक्षा उत्तीर्ण गर्नुभएको थियो । त्यस बखत फाइनल जाँच दिन बनारसमा जानुपर्थ्यो । दाजुले काठमाडौंमा नै शास्त्रीसम्मको अध्ययन गर्नुभएको थियो ।



दाजु रुद्रनाथको विवाह पाल्पा माडीका जिम्वाल वासुदेव घिमिरेकी सुपुत्री नन्दकुमारीसँग भयो । दाजुले काठमाडौंबाट फर्केपछि एक-दुई वर्ष साहेबज्यूको नीलो दरबारमा नोकरी गर्नुभएको थियो । पढाइ अनुसारको काम नभएकाले दाजुलाई यो सेवा मन परेको थिएन । त्यसैले अर्को अनुकूलको कामको खोजी हुँदै थियो, पाल्पामै राम्दीभन्दा पूर्व ठूला हुँगीको संस्कृत पाठशालामा आवासीय शिक्षकका रूपमा शिक्षण कार्य गर्न दाजु पण्डित रुद्रनाथलाई आग्रहसाथ अनुरोध गरियो । त्यो हुँगी पाठशाला १९९० सालतिर काठमाडौं ज्ञानेश्वरका झ्चाउँकीरी खलकका उमादेव पन्त र पशुपतिभक्त पन्त समेतले आफ्नो नामको हुँगी बिर्ता आयस्ताबाट पण्डितलाई तलब दिने गरी निजी स्तरमा स्थापना गरेका थिए । पण्डित परिवारका लागि तलबका रूपमा वार्षिक १६ मुरी धान र रु. १८०।- (एक सय असी) नगद तोकिएको थियो । दुई-तीन वर्ष शिक्षण कार्य गरेर तानसेन बजारका पं. ढुण्डिराजले घरायसी कारणले त्यस बखत पाठशालाबाट अवकाश लिएका रहेछन् । दाजु रुद्रनाथले आग्रह अनुसार १९९४ सालदेखि हुँगी पाठशाालाका पण्डितका रूपमा आजीवन शिक्षण सेवा गर्नुभयो । दाजु रुद्रनाथले हुँगी पाठशाालामा अविच्छिन्न ४१ वर्षसम्म पण्डितको रूपमा रहेर मूलतः संस्कृत विषयको शिक्षण कार्य गर्नुभएको थियो । पाठशाला भवन थियो नै सँगै जस्तो पण्डितलाई बसोबासका लागि सानो आवासीय भवन पनि रहेको थियो ।

हुँगी पाठशाला पाल्पा जिल्ला भरि नै संस्कृत विषयको पढाइ हुने एक मात्र विद्याालय थियो । पाल्पा सदरमुकाम तानसेनमा देवशमशेरको पालामा खुलेको एक मात्र भाषा पाठशाला थियो र त्यसमा नेपाली भाषाको पढाइ लेखाइ सीप सिकाउने काम हुन्थ्यो । संस्कृत विषयको पठन-पाठन थिएन । यता हुँगी पाठशालामा रुद्री, चण्डीका साथै लघुकौमुदी, रघुवंश महाकाव्य, अमरकोश, श्रीमद्भागवत महापुराण आदिको पढाइ हुन्थ्यो । स्थानीय पन्त, सुवेदी, पाठक, पछाइँ आदिले त्यहाँ पढेकै थिए, यसका अतिरिक्त अँगाहा खोलाका रामजी र केशवराज, माडीका भोजराज र नारायण, तानसेनका कमलराज रेग्मी आदिले पनि हुँगी पाठशालामा आवासीय विद्यार्थी भएर अध्ययन गरेका थिए ।

दाजुभाइ छुट्टीभिन्न भएपछि (२००५) दाजु रुद्रनाथले गैरागाउँमा नै पुरानो घर र त्यसले चर्चेको जग्गा किन्नुभयो । २०१४ सालमा पुरानो घरका ठाउँमा नयाँ घर बनाउनुभयो । छोराछोरी हुर्केपछि

उनीहरू गैरागाउँमा नै बस्न थाले भने दाजु-भाउजू हुँगीमा काली गण्डकीको तट नजिकै धार्मिक-आध्यात्मिक र पाण्डित्यपूर्ण शैक्षणिक जीवन बिताउँदै रहनुभयो । बेला मौकामा हुने यज्ञ अनुष्ठानमा र सप्ताह पुराण वाचनमा पनि दाजु रुद्रनाथ संलग्न हुनुहुन्थ्यो । प्रखर प्रवक्ता, विख्यात पुराण वाचक र धर्म संस्कार कार्यका निर्णयकर्ता विद्वान् पण्डितका रूपमा पनि उहाँको प्रसिद्धि रहयो । पूजा-आजा र यज्ञ-हवनका लागि 'संस्कार दीपक' तीन ओटै भागको आधार लिइन्थ्यो भने षोडश संस्कार बारे निर्णय लिनका लागि निर्णय सिन्धुको सहायता लिने गरिएको थियो ।

पिता-माता प्रति दाजु रुद्रनाथको अगाध श्रद्धा र निष्ठापूर्ण भक्ति थियो । बेला मौकामा गैरागाउँ आएर बुवा-आमाको सेवा पनि गर्दै रहनुभएको थियो । सबै भाइहरूमा स्नेहपूर्ण आत्मीय भाव थियो र भाइहरूका बीच पनि सहयोग भावना र मेलमिलाप रहयो । मिलनसार, सहयोगी र सदाचारमा रहेका हामी ६ ओटै दाजुभाइहरू त्यस बखत गैरागाउँ पण्डित परिवारका नामले सुविख्यात रहेका थियौं ।

रुद्रनाथ-नन्दकुमारीका पाँच सन्तान हुन् - तीन छोरा र दुई छोरी । तीन छोराहरू हुन् - गोपीकृष्ण, श्याम र भुवनेश्वर । दुई छोरीहरू हुन् - सरस्वती खनाल र शान्ति चालिसे । सबैको विवाहदान समेत भइसकेको छ र आ-आफ्नो गरेर सुखी जीवन बिताइरहेका छन् ।

रुद्रनाथका जेठा छोरा गोपीकृष्ण शर्मा त्रि.वि. का प्राध्यापक र साहित्यकार हुन् । उनकी श्रीमती हुन् - कल्पना (नारायण दत्त नेपालकी सुपुत्री) । गोपीकृष्ण-कल्पनाका पाँच सन्तान् छन् - एक छोरा र चार छोरीहरू । सबैभन्दा जेठा छोरा हुन् - रामचन्द्र (नेपाल राष्ट्र बैंकको पूर्व निर्देशक) । रामचन्द्रकी श्रीमती हुन् - ममता (प्रा. विश्वनाथ भट्टराईकी सुपुत्री) । रामचन्द्र-ममताका एक छोरा अभिनव र एक छोरी अनुज्ञा छन् ।

गोपीकृष्ण-कल्पनाका चार छोरीहरू हुन् - उमा आचार्य, मञ्जु आचार्य, रमा पोखरेल र पद्मा शिवाकोटी । गोपीकृष्ण शर्मा सपरिवार काठमाडौं ज्ञानेश्वरमा बस्छन् ।

गोपीकृष्ण-कल्पनाका चार छोरीहरूमध्ये जेठी छोरी हुन् - उमा आचार्य । उमाका श्रीमान् हुन् - सागर आचार्य । सागर-उमाका दुई सन्तान छन् - छोरा डा. उशान्त आचार्य र छोरी ऊर्जा आचार्य, सपरिवार काठमाडौं सिफलमा बस्छन् । गोपीकृष्णकी माहिली छोरी मञ्जु आचार्य श्रीमान् अच्युत आचार्यसँगै अमेरिका क्यालीफोर्नियामा बस्छन् । अच्युत-मञ्जुका दुई छोरी छन् - आस्था र आयस्रा । गोपीकृष्णकी साहिली छोरी रमा पोखरेल श्रीमान् महेश पोखरेलका साथ काठमाडौं सुकेधारामा बस्छन् र एक छोरी छन् स्पृहा । गोपीकृष्णकी कान्छी छोरी पद्मा शिवाकोटी श्रीमान् अभयराज शिवाकोटीका साथ मध्य बानेश्वर काठमाडौंमा बस्छन् र दुई सन्तान छन् - छोरी अभीप्सा र छोरा अक्षेश ।

रुद्रनाथका माहिला छोरा हुन् - श्याम शर्मा । यिनकी श्रीमती हुन् - कमला । श्याम-कमलाका तीन सन्तान छन् - एक छोरा मनोज (लुम्बिनी मेडिकल कलेज प्रभासमा लेखापाल) र दुई छोरी सरला गौतम र दुर्गा ज्ञवाली । मनोजकी श्रीमती हुन् - सुनीता । मनोज-सुनीताका एक छोरी छन् सम्पदा । तानसेन, गैरागाउँमा बस्छन् । श्यामकी ठूली छोरी सरलाका श्रीमान् हुन् - जनक गौतम । जनक-सरलाका तीन सन्तान छन् - छोरा ईश्वर र छोरीहरू वर्षा र श्वेता । काठमाडौं ज्ञानेश्वरमा बस्छन् ।

श्यामकी सानी छोरी दुर्गाका श्रीमान् हुन् - राजु ज्ञवाली । राजु-दुर्गाका दुई सन्तान छन् - छोरा आर्यन र छोरी प्रभा । तौलिहवामा बस्छन् ।

रुद्रनाथका कान्छा छोरा हुन् - भुवनेश्वर गौतम (पद्मोदय हाइस्कूलका मा.वि. शिक्षक) । भुवनेश्वरकी श्रीमती हुन् - अम्बिका (रुपसे धनञ्जय नेपालकी सुपुत्री) । भुवनेश्वर-अम्बिकाका दुई सन्तान छन् - छोरा जगदीश (मिसन हस्पिटल, तानसेनमा लेखापाल) र छोरी प्रमिला । जगदीशकी श्रीमती हुन् - सरिता । जगदीश-सरिताका एक छोरी छन् - समृद्धि । तानसेन, गैरागाउँमा बस्छन् । भुवनेश्वरकी छोरी प्रमिलाका श्रीमान् हुन् - जनक जोशी । जनक-प्रमिलाका दुई सन्तान छन् - छोरा प्राञ्जल र छोरी प्रजना । घर भैरहवा, हाल काठमाडौं बस्छन् ।

रुद्रनाथकी सबभन्दा जेठी छोरी हुन् - सरस्वती खनाल । सरस्वती खनालका श्रीमान् हुन् - दामोदर खनाल (नि.मा.वि. शिक्षक) र रुपन्देही मुडियारीमा बस्छन् । दामोदर-सरस्वतीका पाँच सन्तान छन् - तीन छोरा र दुई छोरी । तीन छोराहरू हुन् - ढुण्डिराज, रामेश्वर र भुवन (त्रि.वि.वि.का सहप्राध्यापक) । दामोदर-सरस्वतीका दुई छोरी हुन् - शारदा गौतम (केशवराज गौतमकी श्रीमती) र विजया चालिसे (कपिलमणि चालिसेकी श्रीमती)

रुद्रनाथकी कान्छी छोरी हुन् - शान्ति शर्मा । शान्तिका श्रीमान् हुन् - ऋषिराम शर्मा चालिसे । ऋषिराम-शान्तिका चार सन्तान छन् - दुई छोरा हरि र शालिग्राम तथा दुई छोरी सरस्वती र लक्ष्मी । सबै मुम्बईमा बस्छन् ।

यी सबै दाजु रुद्रनाथका सन्ततिका बेलीविस्तार हुन् । दाजु रुद्रनाथले वानप्रस्थ जीवन जस्तै अवस्थामा रहेर हुँगी काली गण्डकी तीरमा सारा जीवन बिताउनु भयो । भाउजू नन्दकुमारी पछिल्ला वर्षहरूमा पाल्पा गैरागाउँमा नै छोरा-बुहारी र नाति-नातिनासँग बस्न थाल्नुभयो । अन्तिम एक महिना जति दुःख बिमार भएर ६० वर्षको उमेरमा २०३० साल पौष कृष्ण चतुर्दशीका दिन गैरागाउँमा भाउजू नन्दकुमारीको देहावसान भयो । तीनै भाइ छोराहरू, परिवार जन र गाउँका सहयोगी खातीहरूसमेत भएर रानीघाट पुऱ्याउने काम भयो र कृष्णा गण्डकीतटमा अन्त्येष्टि कार्य सम्पन्न गरियो । यसरी पण्डित परिवारकी एउटी आदर्श गृहिणीको सदाका लागि अवसान भयो ।

दाजु रुद्रनाथले उत्तर वयमा र एकल अवस्थामा पनि हुँगी पाठशालामा नै रहेर संस्कृत व्याकरण तथा पुराण आदिको शिक्षण-प्रशिक्षण गर्नै रहनुभयो । यसैगरी ठूलाहुँगी माझ खण्डमा पछि स्थापित भएको जनकल्याण मा.वि.मा स्थापनाकाल देखि नै संस्थापक शिक्षक रहेर उहाँले तेह्र वर्ष (२०२३-२०३५) सम्म अपराह्न आंशिक समय शिक्षण कार्य (संस्कृत र नेपाली विषय) गर्नुभएको थियो । यी अवधिमा पनि हुँगी पाठशालामा पूर्वाह्न कक्षाहरू सञ्चालित थिए, तर विद्यार्थीहरूको आकर्षण थलो भने विस्तारै जनकल्याण मा.वि. हाइस्कूल नै बन्नथालेको थियो ।

दाजु रुद्रनाथ धर्म-कर्म र यज्ञ-अनुष्ठानमा बिशेष संलग्न हुनुहुन्थ्यो । हुँगीघाट मन्दिरमा होस् अथवा पारि पाखीचौर राधाकृष्ण मन्दिरमा होस्, हरिकीर्तन र सप्ताह-पुराण आदि भएको बखत दाजुको पनि सक्रिय सहभागिता रहन्थ्यो । उहाँ पुराणका प्रखर वक्ता र व्याख्याता पनि हुनुहुन्थ्यो ।

२०३६ साल फाल्गुनको कुरा हो । दाजुमा खास त्यस्तो बिमारी थिएन । हिडडुल गर्न सक्नुहुन्थ्यो । यस्तैमा एक बिहान उहाँलाई श्वास प्रश्वासमा बाधा हुनथाल्यो । माहिला छोरा श्याम र बुहारी कमला साथै थिए । छोरा र छिमेकी टीकादेव जोशी तथा पाठकहरू भएर दाजुलाई तत्काल हुँगीघाट गण्डकीतटमा पुऱ्याइयो । काली गण्डकी तीरमा अर्धजलमा राखियो । यसरी २०३६ साल फाल्गुन कृष्ण पक्ष दशमीका दिन एकहत्तर वर्षको उमेरमा बिहानको समयमा धर्मप्राण रुद्रनाथ शर्माले ओम ध्वनिका बीच श्रीकृष्ण परमात्माको ध्यान गर्दै देह त्याग गर्नुभयो । तानसेन र काठमाडौंबाट अरू छोराहरू समेत भेला भएर हुँगीमा नै विधिवत् काजक्रिया सम्पन्न भयो । हुँगी पाठशालाको विख्यात एक युगको अन्त भयो । गैरागाउँ पण्डित परिवारको एक जगमगाउँदो ज्योति सदाका लागि ब्रह्मलीन भयो ।

अन्तमा भतिजा गोपीकृष्ण शर्माले कवितामा रचना गरेको "पिताश्री पं. रुद्रनाथको सम्झना" शीर्षकको संक्षिप्त विवरणिका उनकै 'स्मृतिविम्ब' कविता सङ्ग्रह २०६७ बाट सान्दर्भिकता अनुकूल यहाँ पनि उद्धृत गरिएको छ -

सत्तरी वर्ष बाँचेर शिक्षादान गरिकन
गण्डकीतीरमा नित्य लिने सात्विक जीवन
रुद्रनाथ पिता मेरा ज्ञाता संस्कृत शास्त्रका
वक्ता पुराणका योग्य पिता हे गर्छु सम्झना ।

(१)

जन्मी तानसेनको ठाउँ गहिरागाउँ भूमिमा
काठमाडौं पुगी पायौ शिक्षा संस्कृत-काव्यमा
शास्त्रीसम्म लिई शिक्षा चौरानब्बेतिरै तिमी
पाठशाला हुँगी आयौ शिक्षादान गरौं भनी ।

(२)

सबेरै गण्डकी धाई स्नान-सन्ध्या गरीकन
घर फर्केर गर्थ्यौ हे शालग्राम-शिलार्चन
दिउसो पढ्नका लागि झुम्मिन्थे गुरु सामुमा
प्रायः छात्रहरू मात्र पढ्थे गुरुसमक्षमा ।

(३)

शिक्षा तर्फ अनध्याय प्रतिपदा र अष्टमी
तिथिमा यी बिदा हुन्थे यो हो प्राचीन पद्धति
बाँकी दिन त्यहाँ राम्रो पढाइ चल्दथ्यो सधैं
विभिन्न नामका छुट्टी थिएनन् नि त्यहाँ कुनै ।

(४)

पाठशाला गुरु श्रद्धा साथमा नाम भन्दथे
भन्थे पण्डित यो नाम आस्थाले गुरु मान्दथे
संस्कारमा परे अल्झो दिन्थ्यौ निर्णय शास्त्रको
सप्ताह यज्ञमा वक्ता बन्दथ्यौ व्यास रुपको ।

(५)

शुभ जन्म दिने पूज्य पिता हौ पहिला गुरु
दिने अक्षर आरम्भ तिमी नै हौ पिता गुरु
गायत्री मन्त्रको दीक्षा दिने पनि भयौ गुरु
पाएँ संस्कृतको शिक्षा आचार्य रूप हौ गुरु ।

(६)

शब्दशास्त्र पढेको हुँ सम्पूर्ण लघु कौमुदी
अष्टाध्यायी तथा कोश केही सिद्धान्त कौमुदी
हितोपदेशका साथै रघुवंश र नाटक
पढाउने बुझाएर मेरा हौ पूज्य शिक्षक ।

(७)

हुँगीघाट थियो तीर्थ कृष्णाको तट सुन्दर
वारिपारि थिए पुण्य प्रसिद्ध देवमन्दिर
त्यहाँ पण्डितका साथ सत्सङ्ग नित्य चल्दथ्यो
उपस्थित सधैं हुन्थे पिता सत्सङ्ग मिल्दथ्यो ।

(८)

स्नान-सन्ध्या र पूजामै बिहानी याम बित्दथ्यो
काव्य-कोश पढाएरै सम्पूर्ण दिन बित्दथ्यो
सदा सत्सङ्गमा बित्थ्यो सारा समय बेलुका
योगवासिष्ठ हेर्दैमा जान्थे क्यै याम रातका ।

(९)

पढ्ने पढाउने काम गर्‍यौ पर्यन्त जीवन
पिता हे जन्मदाता हे ! बितायौ पूर्ण जीवन
सेवा मबाट जे हुन्थ्यो भएन पछुताउँछु
दिवङ्गत भयौ ऐले कहाँ दर्शन पाउँछु ।

(१०)

# कुलराज शर्मा

माहिलो दाजु कुलराज शर्मा गौतमको जन्म १९६७ सालमा पिता हीरानाथ र माता कान्तादेवीबाट गैरागाउँमा भएको थियो । दाजुले प्रारम्भिक अध्ययन बुवाबाट घरैमा गर्नुभयो । त्यस बखत पाल्पामा संस्कृत विषय पढाइ हुने विद्यालय थिएन । त्यसैले दाजु कुलराज १६/१७ वर्षको उमेरमा संस्कृत विषयको पढाइका लागि काठमाडौं जानुभयो । त्यस समयमा जेठो दाजु रुद्रनाथ काठमाडौंमा पढ्दै हुनुहुन्थ्यो । यसकारण पनि दाजु कुलराजलाई काठमाडौं जान र पढ्न सजिलो भएको थियो । उहाँले संस्कृत व्याकरणमा सम्पूर्ण मध्यमा परीक्षा उत्तीर्ण गर्नुभयो । दाजु कुलराज काठमाडौंमा त्यस समयमा तीन-चार वर्ष जति बस्नुभएको थियो ।

पाल्पा चिदीपानीमा स्थानीय शिक्षाप्रेमी जनसमुदायले संस्कृत विषयगत शिक्षाको प्रारम्भिक अध्ययन गराउने उद्देश्यले शमी खर्क पाठशालाको स्थापना गरेका थिए । त्यहाँ पढाउने योग्य पण्डितको आवश्यकता भयो । दाजु कुलराज मध्यमा सम्मको पढाइ पूरा गरेर आउनुभएकै थियो, उक्त पाठशाालामा शिक्षकका लागि आग्रह साथ अनुरोध गरियो । १९९८/९९ सालतिर घर सल्लाह गरेर उहाँ आवासीय शिक्षक भएर पण्डितका रूपमा चिदीपानी जानुभयो । त्यहाँ प्रेमचन्द्र पौडेल, विश्वनाथ भट्टराई आदिले संस्कृतको आरम्भिक अध्ययन गरेका थिए । पाँच-छ वर्ष जति समयसम्म दाजु कुलराजले चिदीपानीमा पढाउनुभयो । यसै पाठशालाको जगमा पछि चिदीपानी सौभाग्य विद्यालयको स्थापना भएको थियो ।

चिदीपानीबाट फर्केपछि दाजु कुलराजले २००७ सालतिर एक वर्ष जति कन्या स्कूलमा पढाउनुभयो । यस्तैमा पाल्पा तानसेनमा २००८ सालमा जनस्तरकै सक्रियता अनुरूप जनता विद्यालय हाइस्कूलको स्थापना भयो । दाजु कुलराजले स्थापनाकालदेखि जनता विद्यालयमा शिक्षण कार्य गर्नुभयो । स्कूलमा उहाँले नेपाली विषय र ९/१० कक्षामा संस्कृत विषय पढाउनुभएको थियो । बीस वर्ष जति दाजुले लगातार जनता विद्यालयमा पढाउनुभयो र २०२८ सालदेखि विद्यालय सेवाबाट निवृत्त हुनुभएको थियो ।

दाजु कुलराज धार्मिक-आध्यात्मिक प्रकृतिका हुनुहुन्थ्यो । नैतिक आचरण, सेवाभाव र सहयोग उहाँका विशेषता थिए । सप्ताह, पुराण आदि यज्ञमा होस् अथवा व्रतबन्ध, विवाह आदि संस्कार कार्यमा होस्, कुलराजकै अगुवाइमा कार्य सम्पन्न हुने गरेको थियो । धर्म संस्कार र विविध आशौच आदि बारे तिथि मिति र समयावधि तोक-निर्णय गर्ने काम उहाँले 'निर्णय सिन्धु' धर्मशाास्त्रका आधारमा गर्नुहुन्थ्यो । गाउँ-छिमेकमा पं. कुलराजको विशेष प्रसिद्धि रह्यो ।



दाजु कुलराजको विवाह पाल्पा, खस्यौली, हीरापोखराका भुवनेश्वर खनालकी सुपुत्री देवलक्ष्मीसँग भएको थियो । संयुक्त परिवार थियो । दाजुभाइ सबै गैरागाउँमा नै बुवा-आमासँग बसेका थिए । छुट्टी भिन्न (२००५) भएपछि कुलराजले गैरागाउँमा जग्गा किनेर घर बनाउनु भयो । ओडारे पाखो बारी र जामुने खेत छँदै थियो, खेती किसानी गरेर गृहस्थी जीवनको आदर्श समेत प्रस्तुत गर्नुभयो

। आफ्ना सन्ततिको शिक्षा दीक्षामा पनि विशेष ध्यान पुऱ्याउनुभएको थियो ।

कुलराज-देवलक्ष्मीका नौ सन्तान छन् - तीन छोरा र छ छोरीहरू । तीन छोरा हुन् - दुर्गाराज, टेकराज र रामराज । छ जना छोरीहरू हुन् - सबभन्दा जेठी छोरी भगवती देवी शर्मा, गायत्री ढकाल, विष्णुकुमारी पौडेल, रमा नेपाल, हीरा काफ्ले र हेमलक्ष्मी चालिसे ।

कुलराज शर्माका जेठा छोरा हुन् दुर्गाराज शर्मा, नेपाल सरकारका सहसचिव सम्म भएका, सेवा निवृत्त राष्ट्रसेवक । यिनकी श्रीमती हुन् - रुक्मिणादेवी (विश्वप्रसाद नेपालकी सुपुत्री) । दुर्गाराज-रुक्मिणाका चार सन्तान छन् - दुई छोरा, दुई छोरी । दुर्गाराज-रुक्मिणाका जेठा छोरा हुन् जनकराज शर्मा (नेपाल सरकारका उपसचिव) । जनककी श्रीमती हुन् - रचना (वावुराम पौडेलकी सुपुत्री) । जनक-रचनाका दुई सन्तान छन् - छोरी अंशु र छोरा अभिक ।

दुर्गाराज-रुक्मिणाका कान्छा छोरा हुन् - जीवनराज शर्मा (सिनियर लेक्चरर, एडिनवरा युनिभर्सिटी, स्कटलैण्ड, यु.के.) । जीवनकी श्रीमती हुन् - मोनालिसा (शरदकान्त अधिकारीकी सुपुत्री) । जीवन-मोनालिसाका दुई सन्तान छन् - छोरी आयोना र छोरा आहान ।

दुर्गाराज-रुक्मिणाका दुई छोरीमध्य जेठी छोरी हुन् - सविता । सविताका श्रीमान् हुन् - प्रकाश घिमिरे । प्रकाश-सविताकी एक छोरी छन् - शची । दुर्गाराज-रुक्मिणाका कान्छी छोरी हुन् - अजिता ( नेपाल सरकारका उपसचिव) । दुर्गाराज शर्मा अहिले सपरिवार काठमाडौं शङ्खमूलमा बसोबास गरेका छन् ।

कुलराज शर्माका कान्छा छोरा हुन् - रामराज, त्रि.वि.वि. का सहप्राध्यापक । उनकी श्रीमती हुन् - राधा । रामराज-राधाका एक छोरी छन् - प्रकृति (बि.डि.एस. मा अध्ययनरत) । रामराज सपरिवार भैरहवामा बसोबास गर्छन् ।

कुलराज शर्माका छ जना छोरीमध्ये जेठी छोरी हुन् - भगवतीदेवी शर्मा (नेपाल सरकारका पूर्व शाखा अधिकृत), भगवतीका श्रीमान् हुन् - शोभाकान्त उपाध्याय । शोभाकान्त-भगवतीका दुई सन्तान छन् - छोरा अच्युत र छोरी अञ्जु बराल ।

कुलराज शर्माकी तेस्री छोरी हुन् - विष्णुकुमारी पौडेल । विष्णुका श्रीमान् हुन् - रामचन्द्र पौडेल । रामचन्द्र-विष्णुकुमारीका तीन सन्तान छन् - दुई छोरी र एक छोरा । यीमध्ये जेठी छोरी ईश्वरी खनाल हुन्, अर्की छोरी लक्ष्मी नेपाल हुन् । छोरा चाहि नारायणप्रसाद पौडेल हुन् ।

कुलराज शर्माकी चौथी छोरी हुन् - रमा नेपाल । रमाका श्रीमान् हुन् - भागवत नेपाल । भागवत-रमाका तीन सन्तान छन् - दिलीप र दिनेश नाम गरेका दुई छोरा र दीपा दाहाल नाम भएकी एक छोरी ।

कुलराज शर्माकी पाँचौ छोरी हुन् - हीरा काफ्ले । हीराका श्रीमान् हुन - चन्द्रप्रसाद काफ्ले । चन्द्र-हीराका तीन छोरी छन् - अर्ती, आस्था र अनु ।

कुलराज शर्माकी छैंठौ छोरी हुन् - हेमलक्ष्मी चालिसे । हेमाका श्रीमान् हुन् - विद्युतराज चालिसे । विद्युतराज-हेमाका दुई छोरी छन् - विशाखा र नन्दिनी ।

कुलराजका माहिला छोरा टेकराज र दोस्री छोरी गायत्री ढकाल किशोर कालमै दिवङ्गत भए । यसबाट बावु-आमामा सन्तति शोकको असह्य वेदना भयो । विश्व रङ्गमञ्चमा भोग्नैपर्ने विधि विधान सम्झेर ईश्वरीय चिन्तन गर्दै चित्त बुझाउनु बाहेक के उपाय हुन सक्छ र ?

यी सबै दाजु कुलराजका सन्ततिका बेलीविस्तार हुन् । आफ्ना सन्तानलाई शिक्षित तुल्याउने कुरामा दाजु विशेष सजग हुनुहुन्थ्यो । छोरा हुन् वा छोरी सबै सन्तानले समयमा नै उचित शिक्षा-दीक्षा प्राप्त गरेका थिए र यथासमय विवाहदान पनि भएको थियो । भाउजू देवलक्ष्मी पनि उदार स्वभावकी हुनुहुन्थ्यो । इष्टमित्रको विशेष ख्याल राख्नुहुन्थ्यो र सबै प्रति दया र सेवाको भाव राख्नुहुन्थ्यो । वास्तवमा आदर्श गृहिणी हुनुहुन्थ्यो भाउजू देवलक्ष्मी । दाजु-भाउजू दुवै धार्मिक कार्यहरूमा समान रूपले संलग्न हुनुहुन्थ्यो । समय क्रममा दाजु कुलराजले चौरासी पूजा गर्ने दिन आयो । २०५१ साल वैशााख शुक्ल पूर्णिमाका दिन दाजु कुलराजले सहस्र चन्द्र दर्शन साङ्गता र चौरासी सिद्ध पूजाको धार्मिक कृत्य सपत्नीक भएर सम्पन्न गर्नुभएको थियो । धार्मिक दिनचर्या बितिरहेको थियो । यस्तैमा दुई-तीन दिनको बिमारीले २०५९ साल कार्तिक शुक्ल ठुली एकादशीका दिन दाजु कुलराजले ९२ वर्षको उमेरमा देह त्याग गर्नुभयो । राम्दी काली गण्डकीमा पुऱ्याएर छोराहरूले अन्त्येष्टि क्रिया गरे । गैरागाउँ पण्डित परिवारको एउटा तारा सधैका लागि अस्तायो ।

भाउजू देवलक्ष्मीले धार्मिक तथा सेवामूलक कार्य गर्दै सफल जीवन बिताउनु भयो । उहाँले दाजुका साथ सपत्नीक रूपमा चौरासी पूजा गर्नुभएकै थियो । अब पनि आफ्नो चौरासी वर्ष पुगेका अवसरमा समेत चौरासी पूजा गर्ने हुनुभयो । तदनुसार भाउजू देवलक्ष्मीले २०६१ साल आश्विन शुक्ल पूर्णिमाका दिन सहस्र चन्द्र दर्शन साङ्गता र चौरासी सिद्ध पूजा सम्पन्न गर्नुभयो । यसरी धार्मिक कृत्यमा दिनहरू बित्दै थिए, २०६६ साल फागुन शुक्ल चतुर्दशीका दिन देवलक्ष्मीको देहावसान भयो । गृहिणी रूपी ज्योति सदाका लागि अस्त भयो । छोराहरूले आमा देवलक्ष्मीको विधिवत् अन्त्येष्टि काज क्रिया सम्पन्न गरे ।

गैरागाउँ पण्डित परिवारमा दाजु कुलराज बुवा हीरानाथकै लामो जीवन यात्रामा हिड्दै हुनुहुन्थ्यो । शतायुको नजिक नजिक पुगेर उहाँले पनि हामीलाई अनाथ बनाउनु भयो । दाजु कुलराज अहिले हुनुहुन्न, उहाँको सत्कार्यले हामीलाई दिशा निर्देश गरिरहने छ ।

# भक्तिराम शर्मा

ज्योतिषी ठूलो दाजु भक्तिराम शर्माको जन्म १९६८ सालमा पिता दण्डपाणि शर्मा गौतम र माता पवित्रा देवीबाट गुल्मी चन्द्रकोटमा भीरखानी भन्ने गाउँमा भएको हो । दण्डपाणि शर्मा हाम्रा हजुर बुवा श्रीवल्लभ शर्मा गौतमका तीन छोरा (गजाधर, हीरानाथ र दण्डपाणि) मध्यका कान्छा छोरा हुनुहुन्छ । दण्डपाणिका एकमात्र छोरा भक्तिरामको आरम्भिक शिक्षा चन्द्रकोटमै आफ्नै पिताबाट प्राप्त भएको थियो । दाजु भक्तिराम नौ वर्षको उमेर हुँदा चन्द्रकोटमा नै कान्छो बुवा दण्डपाणिको अकस्मात् देहावसान भयो । पाल्पामा खबर आयो र हतार गरेर बुवा हीरानाथ चन्द्रकोट पुग्नुभयो । बितेको दश दिन पनि नपुग्दै दण्डपाणिकी श्रीमतीको पनि निधन भयो । बीस-बाइस दिन लगाई काजक्रिया सकेर बुवा हीरानाथ पाल्पा तर्फ फर्कदै हुनुहुन्थ्यो, दाजु भक्तिरामले पनि सँगसँगै आफू पनि पाल्पा जानका लागि जोड गर्न लाग्नुभयो । बुवा हीरानाथले पनि भतिजा भक्तिरामलाई बावुको आश्रय दिएर १९७७ सालमा आफूसँगै पाल्पामा ल्याउनुभयो । दाजु भक्तिरामले पछि पनि चन्द्रकोटमा फर्कन चाहनुभएन र बुवा हीरानाथको पितृ वात्सल्य तथा आमा कान्तादेवीको माया ममता पाएर दाजु भक्तिराम पनि यतै रहन थाल्नुभयो । समय क्रममा हामी पाँच भाइ थियौं । अब छ भाइ छोरा भएर परस्पर सौहार्द र प्रेमका साथ रहन थाल्यौं ।

ज्योतिष शिक्षाका लागि नाम चलेको ठाउँ हो पर्वत जिल्लाको पाङ । १८/१९ वर्षको उमेरमा दाजु भक्तिराम ज्योतिष विद्या अध्ययन गर्न पाङमा जानुभयो । ज्योतिषबारे सामान्य अध्ययन गरेर एक-डेढ वर्षमा नै पाल्पामा फर्कनुभयो । यसरी ज्योतिष विषयको पढाइका लागि प्रसिद्ध ठाउँ पाङमा गएको, ज्योतिष विद्या प्राप्त गरेको भन्ने अर्थमा ज्योतिषी दाजु, ज्योतिषी दाइ, ज्योतिषी ठूलो बा भनेर पनि सम्मान गर्न थालिएको थियो ।



दाजु भक्तिराम शर्माको विवाह पाल्पा, खस्यौली हीरापोखराका भुवनेश्वर खनालकी सुपुत्री चन्द्रकुमारी (माहिली भाउजू देवलक्ष्मीकी सहोदर बहिनी) सँग भएको थियो । संयुक्त परिवार थियो । हामी छ भाइ दाजुभाइ मिलेर स्नेह-सद्भावका साथ बसेका थियौं । दाजुहरू पनि आ-आफ्नो काममा लाग्नुभएकै थियो । यसै क्रममा २००३ सालमा हामी दाजु-भाइ आ-आफ्नो हुने गरी छुट्टी-भिन्न हुने प्रसङ्ग चल्यो । बुवा हीरानाथले जो भएको पाखो बारी, खेत, जग्गा जमिन मिलाएर ६ भाइ छोराहरूका लागि ६ अंशभाग लगाइदिनु भयो । बावु-आमाको नाममा अंशभाग छुटयाउनुभएन । तदनुसार एक अंशभाग लिएर दाजु भक्तिराम छुट्टी-भिन्न हुनुभयो । २००५ सालमा अरू भाइहरू पनि आ-आफ्नो अंशभाग लिएर छुट्टी-भिन्न भयौं । बुवा-आमालाई हामीहरूले पालन-भरण पोषण गर्ने निर्णय पनि भयो । साथै बुवा-आमा कान्छा छोरा म सँगै बस्ने हुनुभयो र अन्तिम समयसम्म मै सँग रहनुभयो ।

दाजु भक्तिराम-चन्द्रकुमारीका आठ सन्तान् छन् - पाँच छोरा र तीन छोरीहरू । पाँच छोराहरू हुन् - उमानाथ, बद्रीनाथ, कोमलनाथ, विष्णुप्रसाद (ठूलोभाइ) र देवीप्रसाद (वाल्यकालमै दिवङ्गत) । तीन छोरीहरू हुन् - दीनाकुमारी घिमिरे, दुर्गादेवी पौडेल र मञ्जु (नानीमैयाँ) काफ्ले ।

दाजु भक्तिरामका जेठा छोरा हुन् - उमानाथ शर्मा गौतम (नेपाल सरकारको लेखापालबाट सेवा निवृत्त) । उमानाथकी श्रीमती हुन् - भगवती शर्मा । उमानाथ-भगवतीका तीन सन्तान छन् - दुई छोरा माधव शर्मा (यूनियन लाइफ इन्स्योरेन्स क.लि.का डि.जि.एम.) र महेश शर्मा (ग्लोबल आइएमइ बैंकको शाखा म्यानेजर) तथा एक छोरी मञ्जु आचार्य । माधवकी श्रीमती हुन् - रीता शर्मा । माधव-रीताका दुई छोरी छन् - गरिमा र अग्रिमा । माधव सपरिवार काठमाडौं कोटेश्वरमा बस्छन् । यसै गरी महेशकी श्रीमती हुन् - सरिता शर्मा । महेश-सरिताका दुई छोरीहरू छन् - आभा र आभ्या ।

उमानाथकी एक मात्र छोरी हुन् - मञ्जु आचार्य । मञ्जुका श्रीमान् हुन् डा. विजयराज आचार्य । विजय-मञ्जुका दुई छोरा छन् - आशुतोष र आनत ।

दाजु भक्तिरामका माहिला छोरा हुन् - बद्रीनाथ शर्मा । बद्रीनाथकी श्रीमती हुन् - धनकला । बद्री-धनकलाका चार छोराहरू छन् - हरि शर्मा, किरण शर्मा (गौतम आयुर्वेदका सञ्चालक तथा हाल नेपाल आयुर्वेद औषधि व्यावसायिक संघ केन्द्रीय कमिटीका महासचिव), चिरञ्जीवी र शिवप्रसाद ।

हरि शर्माकी श्रीमती हुन् - लक्ष्मी । हरि-लक्ष्मीका दुई सन्तान छन् छोरा अङ्कित र छोरी अनुष्ठा । किरण शर्माकी श्रीमती हुन् - शोभा । किरण शोभाका दुई सन्तान छन् - छोरा अमन र छोरी साकिरा । चिरञ्जीवी शर्माकी श्रीमती हुन् - पुष्पा । चिरञ्जीवी-पुष्पा एक छोरी छन् - अदिती ।

दाजु भक्तिरामका साहिला छोरा हुन् - कोमलनाथ शर्मा - कोमलनाथकी श्रीमती हुन् - शशी शर्मा । कोमल-शशीका चार सन्तान छन् - एक छोरा र तीन छोरीहरू । एक छोरा हुन् - मनोज शर्मा ( गौतम आयुर्वेदका सञ्चालक) । तीन छोरीहरू हुन् - सुनीता सुवेदी, अनीता लम्साल र बबिता नेपाल ।

कोमलका छोरा मनोजकी श्रीमती हुन् - लक्ष्मी । मनोज-लक्ष्मीका एक छोरा छन् - साहस ।

कोमलकी जेठी छोरी सुनीताका श्रीमान् हुन् - नीलकण्ठ सुवेदी । नीलकण्ठ-सुनीताका दुई सन्तान छन् - छोरा निसान र छोरी नीतु ।

कोमलकी माहिली छोरी अनीताका श्रीमान् हुन् - प्रेम लम्साल । प्रेम-अनीताका दुई सन्तान छन् - छोरा प्रसन्न र छोरी प्रशंसा ।

कोमलकी कान्छी छोरी बबिताका श्रीमान् हुन् - रमेश नेपाल । रमेश-बबिताका दुई छोरा छन् - रीतेश र ह्रीदेश ।

दाजु भक्तिरामका काहिंला छोरा हुन् - विष्णुप्रसाद शर्मा (ठूलो भाइ) । विष्णुकी श्रीमती हुन् - रुक्मिणी ।

दाजु भक्तिराम-चन्द्रकुमारीका तीन छोरीमध्ये जेठी छोरी हुन् - दीनाकुमारी घिमिरे । दीनाका श्रीमान् हुन् - शोभाकर घिमिरे । शोभाकर-दीनाका एक छोरा छन् - कपिल घिमिरे ।

दाजु भक्तिरामकी माहिली छोरी हुन् - दुर्गादेवी पौडेल । दुर्गाका श्रीमान् हुन् - अर्जुन पौडेल । अर्जुन-दुर्गाका चार सन्तान छन् दुई छोरा र दुई छोरीहरू । दुई छोरा हुन् - रवीन्द्र र राजेन्द्र । अर्जुन-दुर्गाका दुई छोरीहरू हुन् - मधु र दीपा ।

दाजु भक्तिरामकी कान्छी छोरी हुन् - मञ्जु (नानीमैयाँ) काफ्ले । मञ्जुका श्रीमान् हुन् - रामप्रसाद काफ्ले । रामप्रसाद-मञ्जुका दुई छोरा छन् - नीरन र नवीन ।

यी सबै दाजु भक्तिरामका सन्ततिका बेलीविस्तार हुन् । दाजु भक्तिराम शर्मा धार्मिक-आध्यात्मिक प्रकृतिका हुनुहुन्थ्यो । धर्म-कर्म र पूजा-आजा प्रति उहाँको विशेष झुकांउ थियो । धार्मिक गतिविधिमा दिनहरू बितेकै थिए, यस्तैमा दाजु भक्तिरामले २०४७ साल फाल्गुन महिनामा ७९ वर्षको उमेरमा देह त्याग गर्नुभयो । हामीहरू मर्माहत भयौं । छोराहरूले विधिवत् अन्त्येष्टि काजक्रिया सम्पन्न गरे । गैरागाउँ पण्डित परिवारको एउटा तारा सदाका लागि अस्त भयो ।

यता भाउजू चन्द्रकुमारीले पतिवियोगको दारुण वेदना सहन गर्दै आफ्ना सन्तानको पालन-पोषण गर्दै रहनुभयो । धर्म-कर्म र तीर्थ व्रतमा पनि उहाँको संलग्नता रहेकै थियो । भाउजू चन्द्रकुमारीले २०६८ साल आश्विन शुक्ल पूर्णिमामा सहस्र चन्द्र दर्शन पूजा-आजा र चौरासी सिद्ध पूजा पनि घरैमा विशेष श्रद्धा र भक्तिसाथ सम्पन्न गर्नुभएको थियो । सन्तति वृक्ष पनि झाङ्गिदै थियो र सबैजसो आ-आफ्नो कर्मक्षेत्रमा लागेकै थिए । समयले साथ दिएन । २०७३ साल भाद्र महिनामा ८९ वर्षको उमेरमा भाउजू चन्द्रकुमारीको देहावसान भयो । सबै छोराहरूले विधिवत् अन्त्येष्टि काजक्रिया सम्पन्न गरे । हाम्रो कुलको एउटा बल्दो दियोपनि लुप्त भयो । सम्झनाले भने हामी सबै परिवारलाई मार्ग-निर्देश गरिरहने छ ।



**दीनानाथ शर्मा**

# दीनानाथ शर्मा

साहिंलो दाजु दीनानाथ शर्मा गौतमको जन्म १९७१ सालमा पिता हीरानाथ र माता कान्तादेवीबाट पाल्पा गैरागाउँमा भएको थियो । उहाँको प्रारम्भिक अध्ययन बुवा हीरानाथबाट घरमै भयो । पाल्पामा संस्कृत विषयको अध्ययनका लागि कुनै विद्यालय थिएन । त्यसो हुनाले थप पढाइका लागि काठमाडौं, जनकपुर वा बनारस आदिमा जानुपर्थ्यो । दाजु दीनानाथ पनि १६/१७ वर्षको उमेरमा संस्कृत विषय अध्ययनका लागि जनकपुर, मटिहानी संस्कृत विद्यालयमा जानुभयो । त्यहाँ अध्ययन गरेर दाजु दीनानाथले संस्कृत व्याकरण विषय लिएर सम्पूर्ण मध्यमा परीक्षा उत्तीर्ण गर्नुभयो । सुरुदेखि पाँच छ वर्षसम्म बसेर त्यस विद्यालयबाट दाजु दीनानाथले वेदान्त विषयमा शास्त्री परीक्षाको प्रथम वर्ष पनि उत्तीर्ण गर्नुभयो । शास्त्री परीक्षाको दोस्रो वर्ष पनि पढ्दै हुनुहुनथ्यो, उहाँलाई देवशमशेरको समयमा पाल्पामा खुलेको भाषा पाठशालामा मूल गुरुको रूपमा शिक्षक भएर भाषा शिक्षण गर्न आग्रह गरियो । घर सल्लाह पनि मिल्यो र १९९८ साल तिर दाजु दीनानाथले सरकारी शिक्षक दरबन्दीमा प्रधान अध्यापक भएर भाषा पाठशालामा शिक्षक कार्यको थालनी गर्नुभयो । यो सरकारी शिक्षक दरबन्दी थियो र २००४ सालमा पाल्पामा पद्मोदय हाइस्कूल खुलेपछि यो सरकारी शिक्षक दरबन्दी कायमै राखेर भाषा पाठशाला पनि त्यस स्कूलमा गाभियो ।

पाल्पामा अङ्ग्रेजी मूल विषय पढाइने गरी स्कूलहरू खुल्ने क्रममा थिए तर संस्कृत विषयको पढाइ हुने विद्यालय थिएन । यस तर्फ स्थानीय शिक्षाप्रेमीहरूको ध्यान जान थाल्यो । स्थानीय बुद्धिजीवीहरू र संस्कृत विषय पढेका पं. दीनानाथ शर्मा, पं. माधवप्रसाद देवकोटा, पं. तिलकराम चालिसेको सत्प्रयासमा तानसेन नारायणस्थानको पेटी-दलानमा देववाणी विद्यालयको स्थापना भयो । दुई-तीन वर्ष पहिले देखि नै दाजु पं. दीनानाथले संस्कृत विषय पढाउँदै हुनुहुन्थ्यो । २०१६ सालतिर राजा महेन्द्रको पाल्पा सवारी भएको बखत खास गरी पं. दीनानाथकै विद्यालय स्थापना गर्ने आवेदन पत्र अनुकूल २०१६ सालमा सरकारी विद्यालयका रूपमा देववाणी संस्कृत माध्यमिक विद्यालयको विधिवत् स्वीकृत भई सञ्चालनमा आयो र दाजु पं. दीनानाथ आफ्नो सरकारी शिक्षक दरबन्दी कायमै रहनेगरी देववाणी संस्कृत विद्यालयको संस्थापक प्रधानाध्यापक बन्नुभयो । निकै वर्ष दीनानाथले विद्यालयको सञ्चालनमा प्रधानाध्यापकको जिम्मेवारी सम्हाल्नु भएको थियो । यस क्रममा नारायणस्थान फूलवारी नजिकै खाली जग्गामा देववाणी संस्कृत मा.वि.को आफ्नो भवन पनि बनेर तयार भयो, विद्यालय आफ्नै भवनमा सऱ्यो । २०२२/२३ सालदेखि देववाणी संस्कृत मा.वि.मा पं. पद्मनाभ शर्मा प्रधानाध्यापक भएर आएका थिए । त्यसपछि पनि दाजु दीनानाथले उमेरका कारणले सेवानिवृत्त नहुँदासम्म पढाउनुभयो । यसरी पाल्पामा संस्कृत शिक्षाको जग बसाल्न र विस्तार गर्न दाजु दीनानाथ शर्माको अहम् भूमिका रहेको छ ।



दाजु दीनानाथको विवाह पाल्पा हनगादीका गुरुप्रसाद घिमिरेकी सुपुत्री महालक्ष्मी सँग भयो । संयुक्त परिवार थियो, ठुलो दाजु र माहिलो दाजु हुँगीमा र चिदीपानीमा जानुभएको थियो । साहिलाँ दाजु दीनानाथले पनि घरैमा र खास गरी

नाराणस्थान पेटीमा संस्कृत व्याकरण र काव्यहरू पढाउन थाल्नुभयो । यही जगमा देववाणी विद्यालयको स्थापना भएको हो । धर्म-संस्कृतिका हिमायती पं. दीनानाथ शर्मा अद्वैत वेदान्त दर्शनका व्याख्याता, पुराणवाचक, धार्मिक अनुष्ठानका प्रणेता र सनातन धर्मको संस्कार प्रकियाबारे निर्णयकर्ता पनि हुनुहुन्थ्यो । विशेष गरेर पाण्डित्यपूर्ण पुराण वाचन र अर्थ व्याख्यानमा उहाँको प्रसिद्धि रहचो ।

तानसेन नारायणस्थानमा पहिले देखिनै प्रतिवर्ष हरेक चतुर्मासमा अपराह्नको समयमा विज्ञ पण्डितबाट अर्थगत व्याख्यान सहित चतुर्मास पुराण वाचन हुनेगरेको थियो । श्रीमद्भागवत महापुराण, ब्रह्मवैवर्त पुराण, देवीभागवत आदि पुराणहरू अर्थसहित व्याख्यान गरिन्थे । यस क्रममा पं. दीनानाथ दाजुले २००५/०६ सालदेखिनै नारायणस्थान पेटीमा व्यासासनमा बसेर बीस-बाइस वर्षसम्म लगातार चतुर्मास पुराण भन्ने गर्नुभएको थियो । पुराण श्रवणका लागि स्थानीय र बाहिरफेरका श्रद्धालु नरनारीहरू आउने गर्दथे ।

छुट्टी भिन्न (२००५) भएपछि दाजु दीनानाथले २००८ सालतिर गैरागाउँ नजिकै धुवाघाटमा चौध-पन्ध्र रोपनी पाखो जग्गा सहित पुरानो घर किन्नुभयो । घाँस-दाउरालाई समेत अन्यत्र जानुपरेन । लगभग वीस वर्ष त्यहीं नै बित्यो । पछि २०२८ सालमा त्यो घर-जग्गा सबै बिक्री गरेर गैरागाउँमा नै बिष्टको डाँडाथोकको जग्गा किन्नुभयो र त्यहाँ घर बनाई बसोबास गर्नुभएको हो । विद्यालयमा धाउन र बुवा-आमाको सेवा गर्न दाजुलाई यहाँबाट सुविधा भयो । उमेरका कारणले दाजु दीनानाथ २०३३ सालमा सरकारी शैक्षिक पदबाट सेवानिवृत्त हुनुभयो ।

दीनानाथ-महालक्ष्मीका सात सन्तान छन् - तीन छोरा र चार छोरी । तीन छोराहरू हुन् - भूपनाथ, हरिकृष्ण र चक्रपाणि । चार छोरीहरू हुन् - हरिकला नेपाल, देवकुमारी रेग्मी, सुशीला चालिसे र सरिता पौडेल । सबैको शिक्षा-दीक्षा र विवाहदान भइसेको छ र सुखसँग आ-आफ्नो जीवन बिताइरहेका छन् ।

दीनानाथका जेठा छोरा भूपनाथ शर्मा नेपाल सरकारका पूर्व सहसचिव हुन् । यिनकी श्रीमती हुन् - पद्मा (हुमकान्त नेपालकी सुपुत्री) । भूपनाथ-पद्माका तीन सन्तान हुन् - छोरा सरोज र छोरीहरू मुना खनाल र सुनीता काफ्ले । सरोजकी श्रीमती हुन् - सावित्रा । सरोज-सावित्राका एक सन्तान छन् - छोरा सबल । भूपनाथ सपरिवार काठमाडौं कोटेश्वरमा बस्छन् ।

भूपनाथ पद्माका जेठी छोरी हुन् - मुना खनाल । मुनाका श्रीमान् हुन् - मदन खनाल । मदन-मुनाका दुई सन्तान छन् - छोरा मनीष र छोरी मनीषा । भूपनाथ-पद्माका कान्छी छोरी हुन् - सुनीता काफ्ले । सुनीताका श्रीमान् हुन् - मोहन काफ्ले । मोहन-सुनीताका दुई सन्तान छन् - दुवै छोराहरू - मीनेश र मोहित ।

दीनानाथका माहिला छोरा हुन् - हरिकृष्ण शर्मा, मा.वि. शिक्षक । उनकी श्रीमती हुन् - शकुन्तला ज्ञवाली । हरिकृष्ण-शकुन्तलाका दुई सन्तान छन् - छोरा दिवेश र छोरी दिव्या । हरिकृष्ण सपरिवार रुपन्देही, बुटवलमा बस्छन् ।

दीनानाथका कान्छा छोरा हुन् - चक्रपाणि शर्मा, मा.वि.शिक्षक । यिनकी श्रीमती हुन् - नारायणी । चक्रपाणि-नारायणीका तीन सन्तान छन् - दुई छोरा र एक छोरी । दुई छोराहरू हुन् - विजय र अविनाश । छोरी हुन् - शशी टण्डन । चक्रपाणि सपरिवार तानसेन, गैरागाउँमा बस्छन् ।

दीनानाथ-महालक्ष्मीका सबैभन्दा जेठी छोरी हुन् - हरिकला नेपाल । यिनका श्रीमान् हुन् - विद्यानाथ नेपाल, नेपाल सरकारका पूर्व सचिव । विद्यानाथ-हरिकलाका तीन सन्तान छन् - दुई छोरा र एक छोरी । दुई छोरा हुन् - परशु (अर्थशास्त्री) र डा. अजित नेपाल (पाटन अस्पताल) । एक छोरी हुन् - निर्मला काफ्ले (बैङ्किङ क्षेत्रका व्यबस्थापक) । विद्यानाथ सपरिवार काठमाडौं कोटेश्वरमा बस्छन् । परशु नेपाल चाहिं सपरिवार अमेरिकामा बसेका छन् ।

दीनानाथ-महालक्ष्मीका माहिली छोरी हुन् - देवकुमारी रेग्मी । यिनका श्रीमान् हुन् - यदुनाथ रेग्मी । यदुनाथ-देवकुमारीका दुई सन्तान छन् - छोरा कमल र छोरी रमा ज्ञवाली । यदुनाथ सपरिवार बुटवलमा बस्छन् ।

दीनानाथ-महालक्ष्मीका साहिंली छोरी हुन् - सुशीला चालिसे । सुशीलाका श्रीमान् हुन् - दामोदर चालिसे, नेपाल संस्कृत विश्वविद्यालयका प्राध्यापक । दामोदर-सुशीलाका चार सन्तान छन् - दुई छोरा र दुई छोरी । दुई छोरा हुन् - निर्मल र नीरज । यसैगरी दुई छोरी हुन् - नीना चालिसे र नीतु ज्ञवाली । दामोदर सपरिवार दाङमा बस्छन् ।

दीनानाथ-महालक्ष्मीका कान्छी छोरी हुन् सरिता पौडेल । सरिताका श्रीमान् हुन् - तुलसीप्रसाद पौडेल । तुलसी-सरिताका दुई सन्तान छन् - छोरा जीवन र छोरी ज्योति चापागाइँ । तुलसीप्रसादका परिवार कपिलवस्तुमा बस्छन् ।

यी सबै दाजु दीनानाथका सन्तति र तिनका शाखा-प्रशाखाका नालीबेली हुन् । दाजु दीनानाथ धर्मप्राण आध्यात्मिक प्रकृतिका हुनुहुन्थ्यो र वेदान्त दर्शनमा उहाँको गहिरो ज्ञान थियो । २०३६ सालमा उहाँको जीवनमा अकस्मात् दारुण वज्रपात भयो । कान्छो छोरा चक्रपाणिको औषधि-उपचार पनि गर्ने र काशी विश्वनाथको दर्शन पनि गर्ने उद्देश्यले दाजु दीनानाथ छोरालाई लिएर बनारस जानुभयो । छोराको सफल उपचार भयो । फर्कने तयारी हुँदै थियो, दाजुलाई कडा डायरिया भयो, निरन्तर पखाला चल्यो । एक रातकै पेटको बिमारीले २०३६ साल पौष कृष्ण नवमीका दिन दाजु दीनानाथले पैसट्ठी वर्षको उमेरमा देह त्याग गर्नुभयो । उहाँको काशीमरण भयो । उहाँको काशीमरणको इच्छा धेरै पहिलेदेखि थियो, परिस्थितिवश दाजु दीनानाथको इच्छामरण नै भयो । छोरी ज्वाइँ सुशीला र पं. दामोदर काशीमै रहेको बखत परेको हुनाले भागीरथी मणिकर्णिकामा छोरा चक्रपाणिबाट अन्त्येष्टि क्रियाकर्म पूरा गरियो र बाँकी काज क्रिया नेपालमा आएर गरिएको थियो । छोरा चक्रपाणिले आफ्नो उपचार गर्न गएको, तर दुःखद कुरा, पितालाई नै गुमाउनु पर्‍यो । धर्मशास्त्रको ज्ञाता, एक जगमगाउदो ज्योति सदाका लागि अस्तायो ।

भाउजू महालक्ष्मी धार्मिक परिवेशमा हुर्के बढेकी शालीन - भद्र गृहिणी हुनुहुन्थ्यो । जीवन यात्रामा आइपरेको दुर्दान्त शोकलाई सहेर नै आफ्ना सन्ततिको पालन-पोषण गर्नुभयो । भाउजू महालक्ष्मीले २०६२ साल माघ शुक्ल पूर्णिमाका दिन सहस्र चन्द्रदर्शन साङ्गता र चौरासी सिद्ध पूजा गर्नुभएको थियो । यसपछि जीवन धार्मिक वातावरणमा सामान्य किसिमले चल्दै थियो । पित्त पत्थरीको सामान्य रोगले

सताएकै बखत २०६६ साल पौष कृष्ण षष्ठी तिथिका दिन भाउजू महालक्ष्मीको ८९ वर्षको उमेरमा देहावसान भयो । यसरी पं. दीनानाथ-महालक्ष्मीको एक युगको अन्त भयो, उहाँहरुका सत्कार्यले भने हाम्रा कुल-परम्परालाई मार्ग निर्देश गरिरहने छन् ।

# रामनाथ शर्मा

काहिंला दाजु रामनाथ शर्मा गौतमको जन्म १९७९ सालमा पिता हीरानाथ शर्मा गौतम र माता कान्तादेवीबाट पाल्पा गैरागाउँमा भएको हो । दाजु रामनाथले प्रारम्भिक अध्ययन घरैमा बुवासँग गर्नुभएको थियो । त्यस बखत जेठो दाजु रुद्रनाथले हुँगी पाठशालामा पढाउन थाल्नुभएको थियो । १७/१८ वर्षको उमेरमा काहिंला दाजु रामनाथ हुँगी पाठशालामा गएर दुई-तीन वर्ष उतै बसी अध्ययन गर्नुभयो । त्यस पछि गैरागाउँ आएर केही वर्ष यतै बिताउनुभयो र जागिरको खोजीमा बुटवलतर्फ लाग्नुभयो । संगोगको कुरा हो, २००१ सालमा भैरहवा सुनौली भन्सार कार्यालयमा जाँचकी कारिन्दाको जागिर मिल्यो । नेपाल भारत आउजाउ गर्ने यात्रुहरूको चेक जाँच गर्नुपर्थ्यो, अवैध कारोवार रोकथाम गर्ने कार्य गर्नुपर्थ्यो ।

भन्सारबाट अवैध सामान चोरी निकासी गर्न पूर्ण प्रतिबन्ध थियो नै । तैपनि त्यस बखत बुटवल तिरका साहुहरूले चाँदीका नेपाली मोहर भरिया मार्फत लुकीछिपी चोरी निकासी गरेर नौतनवा पुऱ्याई भा.रु. मा बेचेर नाफा कमाउने गर्थे । एउटा घटनाको सम्झना हुन्छ, तोकिएको एउटा भरियाले खोक्रो बाँसको लट्ठीमा चाँदीका मोहर भित्रपट्टि लुकाएर लट्ठी टेक्दै चोरी निकासी गर्दै रहँदा जाँचकीद्वारा पक्राउ गरी कारबाही गरिएको थियो । यसरी सीमामा निगरानी राख्ने काम दाजुले पाँच छ वर्ष गर्नुभएको थियो ।

२००६ साल तिरको कुरा हो, आमा कान्तादेवीलाई समेत लिएर माहिला दाजु कुलराज शर्माले भाउजूसहित छोरी भगवती र सानो बाबु दुर्गाराज समेत लाई लिएर बनारस काशी विश्वनाथ तीर्थबर्त गरेर त्यही बाटो फर्कदै गर्दा दाजु रामनाथको सुनौली भन्सार नजिकैको डेरामा एक रात बिताउनुभएको रहेछ । छोरी भगवतीले अहिले पनि दाजु रामनाथको प्रसङ्ग चल्दा त्यस ऐतिहासिक तथ्यलाई सम्झने गर्छिन् ।



दाजु रामनाथको विवाह पाल्पा, भैरवथान मसुरेका खोमलाल नेपालकी सुपुत्री जसोदादेवी सँग भएको थियो । लगभग दुई दशक जस्तै उहाँहरू सँगै रहनुभयो । रामनाथ-जसोदाका दुई छोरीहरू हुन् - ज्ञानुदेवी ढकाल र कमलादेवी खनाल । ज्ञानुका श्रीमान् हुन् - लीलावल्लभ ढकाल । लीलावल्लभ-ज्ञानुका तीन सन्तान् छन् - दुई छोरा एक छोरी । दुई छोरा हुन् - प्रकाश र विष्णु । छोरी हुन् - उषा पौडेल ।

रामनाथ-जसोदाका कान्छी छोरी हुन् - कमलादेवी खनाल । कमलाका श्रीमान् हुन् - भरतराज खनाल । भरतराज र कमला दुवै सरकारी विद्यालयका शिक्षक हुन् । भरतराज सपरिवार तानसेन, गैरागाउँमा बस्छन् । भरतराज-कमलाका तीन सन्तान छन् - एक छोरा र दुई छोरीहरू । छोरा हुन् विमलराज खनाल (नेपाल राष्ट्र बैंकका निर्देशक) । विमलकी श्रीमती हुन् -

कल्पना । विमल-कल्पनाका एक छोरी छन् - कविता । विमलराज खनाल सपरिवार काठमाडौं टोखा रोड, ग्रीनल्याण्डमा बस्छन् ।

भरतराज-कल्पनाका दुई छोरीमध्ये जेठी हुन् - अर्पणा आचार्य । यिनका श्रीमान् हुन् - कपिल आचार्य । कपिल-अर्पणाका एक छोरा छन् - अपूर्व । कपिल सपरिवार देवघाट आफ्नै घरमा बस्छन् । भरतराज-कल्पनाका कान्छी छोरी हुन् - अजिता खनाल । अजिता जन प्रिय मा.वि. वर्तुङमा मा.वि. शिक्षक हुन् ।

दाजु रामनाथ इमान्दारीसाथ सुनौली भन्सार कार्यालयमा सरकारी सेवा गर्दै हुनुहुन्थ्यो, २००७ सालमा उहाँ अचानक बिमार पर्नुभयो । उहाँलाई पाल्पामा ल्याइयो र विशेष औषधि-उपचार पनि गरियो । दैवको लेखा, केही उपाय लागेन, अन्ततः २००७ सालमा २८ वर्षको अल्पायुमा नै दाजु रामनाथको दुःखद देहावसान भयो । हामी सबै परिवार मर्माहत भयौं । भाउजू जसोदा माथि असह्य वज्रपात भयो ।

भाउजू जसोदादेवीले दुःख-कष्ट भोगेर आफ्ना सन्तानको पालन पोषण विवाह दान गर्नुभयो । दाजु बितेपछि भाउजू जसोदा केही वर्ष गैरागाउँ पुरानो घरमा बस्नुभयो । त्यसपछि उहाँ कान्छी छोरी कमलाको गैरागाउँकै घरमा बस्न थाल्नुभयो । छोरी ज्वाइँले पनि भाउजूलाई आमाको सम्मान दिएर राख्ने काम गरे । २०७१ साल आश्विन शुक्ल पूर्णिमाका दिन भाउजू जसोदाले सहस्र चन्द्र दर्शन, चौरासी सिद्ध पूजा गर्नुभयो । समय बित्दै गयो, २०७४ साल श्रावण शुक्ल पूर्णिमाका दिन भाउजू जसोदाले ८७ वर्षको उमेरमा देह त्याग गर्नुभयो । भतिजा चक्रपाणि शर्मा (दाजु दीनानाथका कान्छा छोरा) ले श्रद्धापूर्वक काजक्रिया सम्पन्न गरे । ओखतीमूलो गर्न र काजक्रिया सम्पन्न गर्नाका लागि छोरी ज्वाइँ कमला र भरतराजको सहयोगात्मक विशेष भूमिका रह्यो । मैले पनि आफ्नो तर्फबाट पत्रम् पुष्पम् सहयोग गरे । यसरी पण्डित परिवारको एक ताराको परिवार पनि सदाका लागि अस्त भयो ।

# पद्मनाथ शर्मा

पिता हीरानाथ शर्मा गौतम र माता कान्तादेवीको कान्छो छोराका रूपमा १९८४ साल भाद्र २४ गते, भाद्र शुक्ल पक्ष त्रयोदशी तिथि, शुक्रवारका दिन बिहानको समयमा म पद्मनाथ शर्माको शुभ जन्म भएको हो । १९८२ सालमा गैरागाउँमा बुवाले किन्नुभएको यही पुरानो घरमा म जन्मिएको थिएँ । दुई बहिनी दिदीहरू पछि हामी पाँच भाइ छोरा जन्मेका हौं । ठुलीदिदी जन्मेको एक-डेढ महिनामै बित्नुभयो र सानी दिदी चाहीं दुई-तीन वर्षमै जानुभयो । म जन्मेको बखतमा दाजुहरू पढाइका लागि बाहिर फेर जानुभएको थियो । जेठो दाजु रुद्रनाथ र माहिलो दाजु कुलराज संस्कृत विषय अध्ययन गर्न काठमाडौं रानीपोखरी संस्कृत प्रधान पाठशालामा जानुभएको थियो भने साहिलो दाजु दीनानाथ चाहीँ मटिहानी संस्कृत विद्यालयमा जानुभएको थियो । काहिलो दाजु रामनाथ भने घरमा बुवा-आमासँगै रहनुभएको थियो । त्यस बखत यस ठाउँमा केटाकेटीलाई पढ्ने-पढाउने विद्यालय थिएन । बुवा र दाजुहरूले फुर्सदिलो समयमा मलाई पढाउने र धार्मिक शिक्षा दिने काम गर्नुहुन्थ्यो । केही हुर्के-बढे पछि हुँगी पाठशालामा पढाउन थालेका दाजु रुद्रनाथसँगै गएर केही समय पढेको पनि हुँ । यता गैरागाउँमा बुवा-आमाको हेरचाह समेत गर्नुपर्ने भएकोले हुँगीमा धेरै समय बस्न पाइनँ । जसरी भए पनि पढाइको सुरुवाती ज्ञान भने लिएकै थिएँ ।

मेरो ब्रतबन्ध आठ वर्ष पनि नपुग्दै यही घरमा भएको हो । बुवाको गुरुमुखबाट गायत्री मन्त्र दीक्षा लिएको थिएँ । बुवाले साहेबज्यूको नीलो दरबारमा कारिन्दाको काम गर्नुहुन्थ्यो । ठूलो दाजु र माहिलो दाजु पनि पढाइ सकेर फर्केपछि केही समय साहेबज्यूको दरबारमा पालैपालो काममा लाग्नुभयो । यस्तैमा नीलो दरबारका बुढा साहेबज्यूले मेरो अवस्था थाहा पाएर दरबारको बैठक कोठामा राखी केही महिना मास्टरबाट अङ्ग्रेजी विषय पढाउने चाँजोपाँजो मिलाइदिनु भयो । मैले त्यहाँ The King Primer भन्ने अङ्ग्रेजी किताब पढ्ने मौका पाएको थिएँ ।

म १५/१६ वर्ष जति उमेरको थिएँ । मेरो पढाइ अगाडि बढेको थिएन । यता पारी घरका सुब्बेनी आमा र दाजु मोहनलाल खाती आफ्ना छोराहरू यादवलाल र लेखबहादुरलाई पढाउन भनेर काठमाडौं जाँदै हुनुहुन्थ्यो । उहाँहरूले बुवासँग सरसल्लाह मिलाएर मलाई पनि पढाइका लागि काठमाडौं लैजाने हुनुभयो । म पनि पढ्न पाउने भएर उहाँहरूकै साथमा १९९९ सालमा उहाँहरूसँगै काठमाडौं गएँ । यादवलाल र लेखबहादुरले अङ्ग्रेजी विषय पढ्न थाले भने म चाँहि संस्कृत प्रधान पाठशालामा भर्ना भएर संस्कृत विषय पढ्न थाले । बराबर जस्तो पशुपति वाग्मती नदीमा स्नान गर्न जान्थेँ र पशुपतिनाथ, गुहचेश्वरी माता आदि देव-देवीहरूको दर्शन गर्न समेत जाने गरेको थिएँ । दुई वर्ष जति अध्ययन गरेर संस्कृत प्रथमा परीक्षा पनि उत्तीर्ण गरें ।

म काठमाडौंमा रहँदा पाल्पा साहेबज्यूको काठमाडौंको घरमा पनि बरोबर जाने गर्दथेँ । बुवा यहीं पाल्पामा साहेबज्यूहरूकहाँ जागिरे भएकोले पनि यो सम्पर्क जुटेको थियो । काठमाडौंमा राजखानदानका विशेष संस्कार र पर्वहरूमा नम्बरी पण्डित र केही ब्राह्मण वटुकहरूलाई विशेष सिधा र दक्षिणा वितरण गर्ने चलन रहेछ । मलाई पनि त्यहाँ काठमाडौंका साहेबज्यूका तर्फबाट निमन्त्रणाको टिकट प्राप्त भयो । सोही अनुसार दरबारमा तोकेको समयमा पुगें र गहकिलो सिधा र मिठाई सँगै आधा तोला सुनको सिक्का दक्षिणा पनि पाएको थिएँ । निकै खुसी भएँ, गौरवको अनुभूति भयो ।

दुई-तीन वर्षदेखि पढाइका लागि काठमाडौंमा आराम साथ बसेकै थिएँ । यस्तैमा २००२ सालमा मलाई बुवाले पाल्पा घरबाट “जरुरी काम पऱ्यो छिटै घर आऊ” भनेर चिठी पठाउनु भयो । के काम हो केही खोल्नुभएको थिएन । म जाऊँ कि चिठी लेखुँ भन्ने दोधारमा परें । मोहनलाल दाजुसँग सल्लाह माग्दा उहाँले भन्नुभयो कि - विशेष काम परेर झिकाएको हुनुपर्छ । अहिलेलाई तिमी पाल्पा घर जाऊ । १०/१५ दिन बसेर काठमाडौं आऊ । यसरी मोहनलाल खाती दाजुको सल्लाह अनुसार म पनि भारतको रेलमार्ग भई बुटवल हुँदै तीन दिनमा घर आइपुगें । बुवा आमा सबैसँग भेट कुराकानी भयो खुसी पनि लाग्यो । अनि बुवासँग विनम्र भएर सोधे - किन बुवा, मलाई पढ्दा पढ्दै त्यति टाढा काठमाडौंबाट झिकाउनुभएको हो, के काम पऱ्यो र मलाई बोलाउनुभयो ? अनि बुवाले मलाई सम्झाउँदै भन्न थाल्नुभयो - तँलाई राम्रो ठाउँ, कुल घरानबाट कन्या दिने भएका छन् । अब विवाह गर्नुपर्छ । त्यसैले तँलाई काठमाडौं देखि बोलाएको हुँ । किनभने तँ अठार वर्ष लागिस् । विवाहको उमेर भइसक्यो । तेरा दाजुहरूको बाह्र-तेह्र वर्षमा नै कन्या जुटाएर विवाह भइसकेको थियो । तेरो विवाह त ढिलो हुन थाल्यो । म अप्ठेरोमा परें । भरसक त त्यस बखत विवाह गर्ने उद्देश्य थिएन । बुवा-आमाको जोडबललाई नकार्न पनि सकिएन ।



यसरी पश्चिम पाल्पा फेक भन्ने गाउँमा बस्ने साथै मधेसमा चार-पाँच मौजा भएका जमिनदार खनाल परिवारकी छोरी १३ वर्ष मात्र टेकेकी कन्या नेत्रकुमारीसँग २००२ सालमा जन्तीलाई फेकमै पुऱ्याएर मेरो शुभ विवाह भएको थियो । विवाह सम्पन्न भएपछि दुई-चार महिना त्यतिकै घरमा नै बिते । पढाइले सताउन थाल्यो र यहाँ बस्न नसकी बुवाको आज्ञा लिएर फेरि म काठमाडौं पुगें र संस्कृत विषयको पढाइ त्यतिमै छाडेर अङ्ग्रेजी स्कूलमा भर्ना भई पढ्न थाले । काठमाडौंमा अङ्ग्रेजी विषयको पनि राम्रो पढाइ चल्दै थियो । यस्तैमा यता पाल्पामा पनि अङ्ग्रेजी स्कूल खुल्ने भन्ने खबर सुनें । २००४ सालमा पद्म शमशेरको नामबाट काठमाडौं र काठमाडौं बाहिर पनि पद्मोदय नामका धेरै स्कूल खुल्दै थिए । यसरी पाल्पा तानसेन अमरगञ्ज पौवामा २००४ साल वैशाख १ गतेका दिन पद्मोदय हाइस्कूलको स्थापना भयो र शिक्षण कार्यको पनि थालनी भयो । मलाई पनि आफ्नै ठाउँमा गएर पढ्ने चाहना भयो ।

भाग्यको कुरा हो, पाल्पामा पढ्ने-पढाउने वातावरण नभएको बखत मैले तीन-चार वर्ष भएपनि काठमाडौं गएर पढ्ने केही अवसर पाएको थिएँ । अहिले आफ्नै गाउँ-ठाउँमा स्कूल खुल्दा खुसी नहुने कुरा नै थिएन । म २००३ सालको अन्ततिर काठमाडौं छाडेर पाल्पामा आएँ । त्यस बखत मेरो उमेर २० वर्षको थियो । अङ्ग्रेजीबारे आधारभूत ज्ञान प्राप्त गरेकै थिएँ । त्यसो हुनाले विद्यालय प्रशासनसँग विशेष अनुरोध गरेर ६ कक्षामा भर्ना भएँ २००४ साल वैशाखमा । बुवा-आमा र दाजुहरू पनि बीस वर्षको उमेर भएर पनि पढ्ने मौका पाइस् भनेर खुसी हुनुभयो । खास गरी २००५ सालदेखि मेरो पढाइले गति लियो । मैले स्कूलमा पढ्दै गर्दा घरको आर्थिक अवस्था कमजोर थियो । मैले साँझ-बिहान स्थानीय केटाकेटी जम्मा गरेर टयुशन पढाउन थालें । स्कूलको फिस तिर्न पनि हलौं भयो ।

यसै क्रममा २००५ सालमा हामी दाजुभाइ छुट्टीभिन्न भयौं । म बुवा-आमाको साथमा रहन थालें । म एस.एल.सी. परीक्षामा सामेल हुने योग्यता परीक्षामा २००९ सालमा टेक्स्ट पास भएँ । एस.एल.सी. फार्म भर्दा खेरि मेरो उमेर धेरै भयो । देखाउन मिल्दैन भनेर स्कूलका हेड मास्टरले मेरो जन्ममितिबाट सात वर्ष जति घटाइ दिएर जन्ममिति १९९१ साल भनी कायम गरिदिए । एस.एल.सी. परीक्षा फाइनल दिन काठमाडौं जानु पर्थ्यो । पाल्पामा परीक्षा केन्द्र थिएन । आर्थिक अवस्था कमजोर थियो तर पनि परीक्षामा सामेल हुन काठमाडौंमा त जानै पर्थ्यो । धेरैपटक आउजाउ गरेकाले काठमाडौं जान मलाई अप्ठेरो थिएन । जानका लागि आमा-बुवाले केही रकमको जोहो गर्नुभयो । हुँगीबाट ठूलदाजु रुद्रनाथले जाँच दिन जाने भनेर रु.५० (पचास) पठाइदिनुभयो र काठमाडौंबाट प्रतिवर्ष हुँगीमा आउजाउ गर्ने शिवदेव पन्त (शङ्करदेव पन्तका भाइ) लाई मेरो भाइ हो, हेरविचार होस् भनेर पत्र पनि लेखिदिनुभयो ।

म परीक्षामा सामेल हुनका लागि काठमाडौं गएँ । दिउसोको समय थियो, पुतलीसडक शिवदेवको घरमा पुगेर दाजुले लेखिदिएको पत्र दिएँ । त्यस बखत शिवदेव पन्त घरमा नभएका मौका परेछ । म त्यहाबाट फर्केर टुँडिखेल धरहराको पछाडि पट्टि डेरा खोजेर बस्न थालें । पन्ध्र-बीस दिन पछि शिवदेव पन्तलाई भेट गर्न पुतली सडक पुगें । खुसी हुनुभयो । यतिका दिन कहाँ हराएको भनी सोध्नुभयो । बाहिर बस्ने होइन, यही बस्ने हो भनेर आफ्नै घरको एउटा कोठा दिनुभयो । आफ्ना केटाकेटीलाई पढाइदिने भनेर मासिक रु. ३५।- (पैतीस) दिने व्यवस्था पनि मिलाइदिनु भयो । खाना पकाउनका लागि भुसे चुलोको पनि तर्जुमा भयो । मैले त्यही बसेर एस.एल.सी. परीक्षामा सामेल भएँ र पास पनि भएँ । यसरी आफ्नो चौबीस वर्षको उमेरमा मैले एस.एल.सी. पूरा गरेको थिएँ । यसमा बुवा-आमाको र खास गरी हुँगी ठूलदाजुको योगदानलाई कहिल्यै बिर्सन सकिंदैन ।

मलाई केही काम गरौं र पढाइलाई अगाडि बढाऔं भन्ने इच्छा भयो । शिवदेव पन्तसँग कुरा गरें । एस.एल.सी. पास भएकै थिएँ । शिवदेवलाई भनेर कुमारी चोक अड्डामा खरदारका लागि दरखास्त पनि दिएँ । पास भएँ र महिनाको रु. ४५।-(पैतालीस) पाउने गरी खरदार जागिरे पनि भएँ । खास कामको भीड थिएन । बिहान अड्डा खुल्ने बेला जान्थे । हाजिर हुन्थें । दिउसो काम पनि थिएन । मौका मिलाई त्रिचन्द्र कलेज घण्टाघरमा आई.कम. पढ्न जान्थें । पढाइ, जागिर र बसाइ सबै राम्रो सँग मिल्दै थियो । थोरै बचाएर घर बुवा-आमालाई पनि केही रकम पठाउने गर्थें । राम्रा दिन आउन लागेका थिए । साथै शिवदेव पन्तले काठमाडौंमा बसोबासका लागि १०/१२ आना जग्गा किन्नुपऱ्यो भनेर प्रस्ताव राख्नुभयो । पैसा छैन त्यो जग्गा किन्न भन्दा म मिलाइदिन्छु, बिस्तारै तिरे हुन्छ, अथवा पाल्पाको जग्गासँग सट्टीपट्टी गरे पनि हुन्छ भन्नुभयो । तर मैले आँट गरिनँ । काठमाडौं स्थायी रूपले बसौंला भन्ने पनि थिएन ।

मैले त्रिचन्द्र कलेजमा पढ्दै थिएँ र जागिरे पनि थिएँ । फुर्सदको बेला दिनको एक-दुई घण्टा समय मिलाएर ट्यूसन पठाएरै बितेको थियो । जीवन खास लक्ष्यका साथ आगाडि बढिरहेको थियो र कुनै त्यस्तो समस्या पनि थिएन । यस्तैमा २०११ साल मङ्सिर महिनामा अचानक म बिरामी भएँ । जाडो महिना, काठमाडौंको चीसो वातावरण ज्वरो र रुघा खोकीले नराम्रोसँग गलायो । टन्सिलले पनि दुःख दियो । सामान्य औषधिले छोएन । लगातार खोकी लाग्दै रहचो, ज्वरोले छोडेन । जँचाउन हस्पिटल जानुपर्छ भन्ने जोडबल भयो । म पनि व्यथाले चेप्दै गएकोले रोगको निदानका लागि हस्पिटल गएँ । डाक्टर प्रक्रिया पुऱ्याई जाँच गर्दा क्षयरोग (टी.बी.) ले छोइसकेको रहेछ । रोग अनुकूल औषधि-उपचार हुँदै रहचो । खास

सुधार भएन । अनि डाक्टरले मलाई टी.बी. को उपचार हुने टोखा अस्पतालमा लैजाने कुरा गरे । मलाई टोखामा जाने इच्छा भएन । त्यहाँ औषधि उपचार र आवास सबै निःशुल्क हुन्छ भनेर पनि सम्झाउने प्रयास भयो । टोखा सल्लाघारीमा एकाध महिना बसेर पनि टी.बी. निको हुन्छ भनेर विश्वास दिलाउन चाहे पनि म टोखा जान मानिनँ । बरु अहिले पाल्पा घरमै जान्छु, बुवा-आमालाई यहाँ बिरामी भएर बस्दा पीर हुन्छ, उहाँहरूसँगमा नै जान्छु भनेर जिद्दी गर्दै रहे । केही लागेन । आखिरमा डाक्टरले ३/४ महिनाको औषधि दिएर पथ परहेजमा बस्ने गरी पाल्पा जान स्वीकृति दिए । हवाई जहाजमा नजानुहोला भनेर सल्लाह पनि दिए ।

यसरी म अफिसतर्फ र शिवदेवसँग पनि सरसल्लाह गरी साथी खोजेर थानकोट देखि अमलेखगञ्जसम्म तामदानमा बोकिई स्थल मार्गबाट भारत हुँदै भैरहवामा आइपुगें । भैरहवा आइपुगेर पाल्पा जे.भी.टी. स्कूलमा पढाउन थाल्नुभएका माहिला दाजु कुलराज शर्मालाई बेहोरा बताएर बुटवलसम्म लिन आउनुहोस भनेर आ.वा. गरें । दाजु बुटवल आउनुभयो र म पनि बुटवल पुगें । त्यहाँ मेहलधाराका रुद्रप्रसाद श्रेष्ठको घरमा एक रात वास बस्यौं । अर्को दिन भरिया बन्दोबस्त गरी डोकामा बोकाइएर दुई दिन लगाई म दाजुसँगै पाल्पा घर पुगें । म दुब्लाएकै थिएँ र शरीर पनि रोगी थियो । बुवा-आमाले यस्तो बिरामी अवस्थामा पनि हिम्मत गरेर घर आएछौं । अब यहाँ पनि ओखतीमूलो र पथ परहेजमा राखौंला निको सन्चो हुन्छ भन्दै घर आइपुगेकोमा खुसी व्यक्त गर्नुभयो । ठूलो भाग्यले त्यति टाढाबाट आयौ भन्न थाल्नुभयो । छरछिमेक र इष्टमित्रहरू पनि त्यस बखत मलाई भेट्न आएका थिए ।

मेरो औषधि-उपचार हुँदै थियो । घर पुगेको महिना दिन नपुग्दै ससुराली फेकबाट मलाई लिन मान्छे आए र म बोकिएर ससुराली फेकमा पुगें । ससुराली घर सल्लाघारीको बीचमा रहेको छ र सल्लाको वातावरणले टी.बी. निको हुने भनिएकाले पनि मलाई त्यहाँ लगिएको हो । त्यस बखत ससुरा बितिसक्नुभएको थियो । २००५ सालमा ससुराको निधन पछि साला ज्ञानप्रसाद खनाल तानसेनमा म कहाँ बसेर हाइस्कूलमा अङ्ग्रेजी पढ्न थालेका थिए । साला पनि मसँगै फेक गए । म सल्लाघारी बीचमा एक महिना जति ससुरालीमा बसें । मलाई फेरि दम बेथाले सताउन थाल्यो । ओखती मूलो गर्न सजिलो पर्ने हुनाले म तानसेन घरमा आएँ । डाक्टरी औषधि खाँदै थिएँ ; आयुर्वेदीय औषधि पनि सुरु गरें । सुवर्ण मालती भस्म महमा फेटेर खान थालें । मेरो बिरामी अवस्था थाहा पाएर हुँगी बस्ने ठूलदाजु रुद्रनाथ शर्माले हुँगीका नाम चलेका वैद्य डम्बरदेव पन्त कहाँ बाट थप सुवर्ण मालती भस्म लिएर भेट्न आउनु भयो । यसप्रकार हर क्षेत्रबाट मेरो उपचार हुँदै रहचो ।

मेरो अवस्था बुझेर पारी घरका मेरा साथी कम्पाउन्डर लेखबहादुर खातीले गुरुज्यू बाजेको टुँडिखेल सँगैको सानो घरमा खुलेको औषधालयमा मलाई लिएर गए । त्यहाँ अमेरिकन डाक्टर फ्रेडरिकले औषधि उपचार गर्ने गरेका थिए । डा. फ्रेडरिकले जाँच गरेर मलाई भने - औषधि गर्ने कि नगर्ने ? यदि लगातार दिन नबिराएर टी.बी. को औषधि खाने हो भने चार-पाँच महिनामै निको सन्चो हुन्छ । मैले पनि आँट गरेर डाक्टरले दिएको औषधि रेगुलर खान थालें । डाक्टरले सोध्नाको कारण मलाई पछि थाहा भयो । बजारमा अमेरिकन औषधि खान हुँदैन । यो औषधालय हटाउनु पर्छ, राख्न हुँदैन भन्ने व्यापक हल्ला रहेछ । यो पनि पछि थाहा भयो कि केही निहित स्वार्थ भएका उपचाररत व्यक्तिहरूले चलाएको व्यर्थको हल्ला

रहेछ । त्यो औषधालय वर्षौ चल्यो । मलाई त्यो डाक्टरी औषधिले निकै फाइदा गऱ्यो । तीन-चार महिनामा नै म तङ्ग्रिन थालें । स्वास्थ्यलाभ हुँदै गयो ।

मलाई घरबाट र इष्टमित्रबाट अब काठमाडौं जान हुँदैन भन्न थाले । सबैले त्यस्तै सल्लाह दिएकाले पाल्पा दरबार अगाडि अड्डामा गएर काठमाडौं कुमारी चोक अड्डामा पुग्ने गरी खरिदार पदबाट राजीनामा दिएर घर आएँ । मलाई एकाध वर्ष पढ्न र मिहिनेत गर्न पनि हुँदैन, आराम साथ बस्नुपर्छ भनेर सम्झाइयो । यसरी बुवा-आमाको सेवा गरी औषधि उपचार गर्दै घरमा नै बस्न थालें ।

मैले काठमाडौं देखि नै टी.बी.को उपचारमा आषधि सेवन गर्न थालेको थिए । चार-पाँच महिना बितिसकेको थियो । सबैतिरबाट म स्वस्थ पनि बन्दै गएको थिएँ । यता मैले नै पढेको पद्मोदय हाइस्कूलमा एउटा शिक्षकको दरबन्दी खाली रहेछ । आई.कम. सम्म पढेर खाली बसेको भन्ने थाहा पाएर मलाई स्कूलबाट बोलाउने काम भयो । खाली मास्टरको दरबन्दीमा स्कूलले मलाई भर्ना गर्ने कुरा उठाइयो । मैले घर सल्लाह गरी स्कूलमा पढाउन आउँछु भन्ने खबर पठाएँ । मलाई मासिक तलब रू. ४०।- (चालीस) पाउने गरी २०११ साल चैत्र ११ गतेका दिन पद्मोदय हाइस्कूलमा मास्टरका रूपमा भर्ना गरियो । ६ महिना पछि स्थायी मास्टर गराएर प्रति महिना रू. ७५।- (पचहत्तर) दिन थालियो । यसरी मेरो शिक्षक जीवन सुरु भयो जुन उमेरले सेवानिवृत्त नहुँदा सम्म कायमै रहचो । सुरुमा नि.मा.वि. तहमा पढाउन थाले । खाली भएको बखत मा.वि. तहमा ९ तथा १० कक्षामा पनि पढाउने गरेको थिएँ ।

स्कूलको चाहना अनुसार मैले ऐन स्रेस्ता विषय पढेर फारम भरी एक पेपर जाँच पनि दिएँ । पास भएँ । यता स्कूलमा कक्षा ९-१० मा कम्पल्सरी गणितको विकल्पमा ऐन स्रेस्ता राखियो । मैले त्यो विषय पढाउन थालें । एस.एल.सी.मा कम्पल्सरी गणितमा अलजेब्रा र ज्यामिति मा धेरै विद्यार्थी फेल हुन्थे । अब त्यसको बदला ऐन स्रेस्ता पढ्न थालेपछि निकै सुधार भयो । धेरै विद्यार्थी एस.एल.सी.मा पास पनि हुन थाले । पछि गएर विज्ञान विषय पढ्न चाहने विद्यार्थीहरू कम्पल्सरी गणित पढ्थे भने अन्य विषय पढ्ने इच्छा भएकाहरू ऐन स्रेस्ता विषय पढ्थे । यसरी क्षमता अनुसार विद्यार्थीहरूले कम्पल्सरी गणित वा ऐच्छिक ऐन स्रेस्ता पढ्ने गरेका थिए ।

२०२० सालमा स्कूलले व्यावसायिक शिक्षा दिनु पर्ने सरकारी नीति ल्याइयो । पद्मोदय हाइस्कूल पनि पद्म पब्लिक नमुना व्यावसायिक मा.वि. का रूपमा परिणत भयो । मैले पछि मात्र कृषि विषयको अल्पकालिन तालिम लिएँ र स्कूलमा खेतीपाती गर्ने प्रायोगिक विधि समेत पढाउन थालें । धुवाघाटका भरतराज खनाल र भतिजा भुवनेश्वर गौतमले तालिम प्राप्त गरेर फर्निचर विषय पढाउँथे । विद्यार्थीले रुचि अनुसार कुनै पनि व्यावसायिक विषय छनोट गरेर लिन पाउँथे । नयाँ शिक्षा लागू भएपछि सिटिभिटीले व्यावसायिक शिक्षा अलग्गै चलाउन थाल्यो । स्कूलमा रहेन ।

नेपालमा शिक्षा क्षेत्रमा राष्ट्रिय शिक्षा पद्धतिको योजना (रा.शि.प.यो. २०२८-२०३२) चाहिँ २०२८ सालदेखि शुरु भएर नेपाल राज्य भर २०३२ सालसम्म लागू भइसक्ने गरी कार्यान्वयन गरिएको हो । यसैलाई नयाँ शिक्षा योजना पनि भनिन्छ । पाल्पाका पब्लिक स्कूलहरूमा पनि २०३० सालदेखि नयाँ शिक्षा लागू भयो । स्कूलहरू सरकारीकरण भए स्कूलको व्यवस्था र शिक्षकहरूको तलब सुबिधा अबदेखि जिल्ला शिक्षा अधिकारी मार्फत सरकारले नै हेर्ने भयो । शिक्षकको सेवा सुरक्षित हुने भयो र निवृत्त हुँदा

निवृत्तिभरण (पेन्सन) पनि पाउने भए । हामीले पढाउँदै गरेको पद्म पाल्पा पब्लिक हाइस्कूल पनि त्यस शैक्षिक प्रणालीमा आबद्ध भयो ।

मैले हाइस्कूलमा २०११ सालदेखि पढाउन थालेको हुँ । मैले सुरुदेखिनै साँझ बिहान घरमा अङ्ग्रेजी बिषय टच्यूसन पढाउन थालेको थिएँ । पछि ऐन स्रेस्ता बिषयमा पनि टच्यूसन पढाउने गरेको थिएँ । यो काम नयाँ शिक्षा लागू हुनुभन्दा पहिले सम्म कायम रहचो । टच्यूसन पढाएर नै मैले आर्थिक अवस्था सुधार्दै लगेको हुँ । यसरी जम्मा हुदै गरेको रकमबाट मैले पहाडमा र तराईमा पनि केही जग्गा जमिन जोड्ने काम गरेको हो । मैले आफूले पढेर र पढाएर समेत मनग्य सम्पत्ति जोडेर बुवा-आमाको रेखदेख गर्दै घरको अवस्था राम्रो गराएको हुँ । मैले पढाएका विद्यार्थीहरू बेला मौकामा भेट हुँदा मैले पढाएको योगदान सम्झन्छन् र सम्मान गर्छन् । मलाई खुसी लाग्छ । कमाएको मुख्य सम्पत्ति नै यही हो जस्तो लाग्छ ।

दिउसो स्कुलमा पढ्नका लागि समय नमिल्ने/नपाउने शिक्षार्थीहरूलाई लक्षित गरेर स्थानीय शिक्षाप्रेमीहरूका साथै चेतबहादुर कुँवर, षडमुख थापा, यशपाल शाक्यहरूको अग्रसरतामा २०१८ साल तिर तानसेन, ठाडो गल्ली नजिकै महेन्द्रबोधी रात्री प्रौढ हाइस्कुलको स्थापना भएको थियो । त्यहाँ पनि ९/१० कक्षामा गणित विषयको विकल्पमा ऐन स्रेस्ता पढाउन आग्रह गरिए अनुसार मैले एक दशकसम्म बेलुकाको क्लासमा आंशिक शिक्षण कार्य गरेको थिएँ । २०३० सालमा नयाँ शिक्षा लागू भए बमोजिम महेन्द्रबोधी स्कुल पनि दिवा स्कुल भएको समयभन्दा पहिले सम्म मैले उक्त रात्री स्कुलमा पढाएको थिएँ ।

मैले पुगनपुग ४० वर्ष सम्म लगातार शिक्षण सेवा गर्दै रहें । प्रमाणपत्रको अभिलेख अनुसार सेवामा ५८ वर्ष उमेर पुगेपछि उमेरका कारणले सेवाबाट निवृत्त हुने प्रावधान रहेकोले म २०४९ साल माघ १९ गते देखि विधिवत् सेवानिवृत्त भएको हुँ । त्यसै दिनदेखि निवृत्तिभरण अहिलेसम्म लिँदै आएको छु । तीर्थव्रत गर्ने धार्मिक पुराणहरू श्रवण गर्ने, हरिनाम सङ्कीर्तन गर्ने र पारिवारिक दायित्व सम्हाल्ने जस्ता क्रियाकलापबाट मेरा दिनहरू बितिरहेका छन् । छरछिमेकमा र कुनै खास उद्देश्यले सामूहिक रूपमा सप्ताह पुराण आदि लगाउँदा सक्दो आर्थिक सहयोग गर्ने काम भएकै छ । मैले आफैले पनि घरमा एक पटक र चण्डी थानमा दुई पटक सप्ताह नवाह यज्ञ पनि सम्पादन गरें । बुवा हीरानाथले साढे तीन करोड सङ्ख्यामा कलितारण मन्त्र हरिनाथ जपेर २०१० सालमा पूर्णताको साङ्गता यज्ञ पनि गर्नुभएको थियो । त्यसको प्रभाव म माथि पनि नपर्ने भन्ने रहेन । मैले पनि सङ्कल्प गरेर २०५५ सालदेखि कलितारण मन्त्र हरिनाम सङ्कीर्तन जाप सुरु गरें । नित्य-नैमित्तिक कार्य कायमै राखेर खाली समयमा 'हरेराम हरेराम' मन्त्र जाप गर्ने गरेको थिएँ । साढे तीन करोड जपसङ्ख्या पुऱ्याउन निकै समय लाग्यो । अन्ततः जपसङ्ख्या पूरा भएपछि २०६१ सालमा त्रिवेणी, नारायणी नदी किनार गजेन्द्रमोक्ष धाम पुगेर एक रात उतै बसी आठ-दश ब्राह्मणहरू जुटाएर हरिनाम सङ्कीर्तन पूर्णताको साङ्गता समापन यज्ञ विधिवत् सम्पन्न गरें । यज्ञ सम्पादन गर्न छोराहरू हरिकृष्ण, शङ्कर र विष्णुको विशेष सहयोग रहचो । बुहारी ममता गौतम पनि यज्ञमा सक्रिय रहिन् । गैरागाउँबाट र काठमाडौंबाट पनि ज्वाईं-चेलाहरू र भाइ-भतिजाहरू जुटेका थियौं । जीवनको महत्वपूर्ण यज्ञ थियो त्यो साङ्गता यज्ञ ।

मैले यस प.प. हाइस्कूलमा सुरुमा पढ्दा र पछि पढाउँदा पनि पाल्पा फेक घर हुने साला ज्ञानप्रसाद खनाल र काठमाडौं घर हुने भरतदेव पन्तका छोरा मोहनदेव पन्त पनि हामीकहाँ नै बसेर

स्कूलमा पढ्ने गरेका थिए । साला ज्ञानप्रसादले यहाँबाट नै एस.एल.सी. पास भएर इन्जिनियर विषय पढ्न थाले भने मोहनदेव चाहिँ छ-सात क्लासमा पढ्दा पढ्दै अगाडि थप पढाइका लागि आफ्नै ठाउँ काठमाडौं तर्फ लागे । पढाइ पूरा भएपछि साला ज्ञानप्रसादले धेरै समयसम्म भैरहवा नगरपालिकामा इन्जिनियर पदमा रहेर सेवा पुर्‍याएका थिए । मोहनदेव पन्तले काठमाडौंमा नै वाणिज्य विषयमा स्नातकोत्तर तह पूरा गरेर नेपाल सरकारका सचिव सम्म भएका थिए । दुःखको कुरा, अहिले यी दुवै जना कीर्तिशेष भइसकेका छन् ।

म र श्रीमती नेत्रकुमारी दुवै धार्मिक कार्यमा समान रूपले संलग्न भएका छौं । पूजा-पाठ गर्दा र सप्ताह आदि यज्ञ गर्दा आवश्यक सामग्री जुटाउने काम श्रीमतीबाट नै हुने गरेको छ । म दीर्घ रोगी जस्तै, मेरो देखभाल गर्ने काम छँदैछ, इष्टमित्र र नालनाता प्रति पनि स्नेहपूर्ण मायालु व्यवहार रहेको मैले देखेको छु । एउटा सानो प्रसङ्ग उठाउन चाहन्छु । २०७३ साल तिरको कुरा हो, सोह्र श्राद्ध आश्विन कृष्ण पितृपक्षका समयमा बिहान निद्रा नखुल्दै यहीं गैरागाउँमा उनले सपना देखिछन् - विगत दश-बाह्र वर्षभित्र गाउँमा बितेका स्थानीय पितृहरू र दिवङ्गत नालनाताहरूले पनि पालैपालो केही चाहना गरेको अनुहार देखाउँदै अलप हुँदै गरेछन् । अरूका लागि यो सामान्य कुरा होला, तर श्रीमतीका लागि विशेष प्रेरक घटना हुन पुग्यो । पितृपक्ष छँदै थियो, लगत्तै एक दिन पुडी, तरकारी र खीर मनग्य बनाएर गाउँलेहरूलाई निम्ता गरेर पितृप्रसाद खान दिइन्, साथै घर अगाडि मूल बाटोमा हिडेका अतिथिहरूलाई पनि विशेष आग्रह गरेर खीर, पुडी, तरकारी प्रसाद ग्रहण गर्न अनुरोध गरेर स्वीकार गर्न लगाइन् । त्यस पछि पितृहरूले अनुहार देखाउन छाडे । पिता पुर्खाप्रतिको श्रद्धाको उदाहरण हो यो ।

हाम्रो परिवारमा तीन छोरा (हरिकृष्ण, शङ्कर र विष्णु) तथा तीन छोरी (पुष्पा, महालक्ष्मी र परमेश्वरी) हुन् । छोरीहरूको विवाहदान भइसकेको छ र छोराहरू पनि विवाहित छन् र आ-आफ्ना पेसामा संलग्न छन् । २०५४ सालमा खुसीराजीले छुट्टी भिन्न हुने प्रसङ्ग आयो । मधेस-पहाडका सबै जग्गा जमिन तीन भाइ छोरालाई तीन अंश र हामी बावु-आमालाई एक अंश गरी चार भाग लगाइयो । तीनै भाइ राजीखुसीले छुट्टी भिन्न भए । हामी बावु-आमा सरसल्लाहले कान्छो छोरो विष्णुसँग बस्ने भयौं । बुढो घरको आधा भाग छोराहरूलाई छाडेर बाँकी आधा भाग हामी बावु आमाले राख्यौं । समयक्रममा हामी विष्णुसँग भैरहवा गएर केही समय डेरामा बसेका थियौं । यस्तैमा कान्छो छोरो विष्णुले नेपाल राष्ट्र बैङ्क भवन नजिकै सडकको छेउमा पुरानो घर किन्यो र मरमत गरेर हामी त्यसैमा बस्न थालेका हौं । त्यसपछि भैरहवामा नै भित्र पट्टि आवासीय उद्देश्यले बन्दै गरेको केही जमिन सहितको घर किनियो र मरमत गरेर त्यस घरमा बसोबास गर्न थालिएको हो । २०६८ सालमा मैले चौरासी सिद्ध पूजा पनि त्यसै घरमा सम्पन्न गरेको हुँ ।

हाम्रो परिवारमा हामी पद्मनाथ-नेत्रकुमारीका तीन छोरा मध्ये जेठा छोरा हुन् - हरिकृष्ण ( सामान्य कृषि व्यवसायी) । यिनका श्रीमती हुन् - सावित्रीदेवी (तोयनाथ शर्मा खनालकी सुपुत्री) । हरिकृष्ण-सावित्रीका सात सन्तान छन् तीन छोरा र चार छोरी । यी तीन छोरा हुन् - रामकृष्ण, श्रीकृष्ण र नारायण । हरिकृष्ण-सावित्रीका चार छोरीहरू हुन - शारदा सापकोटा, सुशिला (मुना) पौडेल, सुषमा काफ्ले र सरस्वती शर्मा ।

हामी पद्मनाथ-नेत्रकुमारीका माहिला छोरा हुन् - शङ्कर (पर्यटन व्यवसायी) । शङ्करकी श्रीमती हुन् - महालक्ष्मी । शङ्कर-महालक्ष्मीका तीन सन्तान छन् - एक छोरा सुरज र दुई छोरीहरू - मुना ज्ञवाली र अर्चना उप्रेती । सुरजकी श्रीमती हुन् - स्मीता (इश्वर पौडेलकी सुपुत्री) । सुरज - स्मीताका एक छोरा छन् प्रवेश । हामी पद्मनाथ-नेत्रकुमारीका कान्छा छोरा हुन् - विष्णु (पर्यटन व्यवसायी) । विष्णुकी श्रीमती हुन् - ममता (ध्रुव प्रसाद खनालकी सुपुत्री) । विष्णु-ममताका दुई छोरा छन् - निश्चल र क्षितिज ।

हामी पद्मनाथ-नेत्रकुमारीका तीन छोरी मध्ये जेठी हुन् - पुष्पा आचार्य । पुष्पाका श्रीमान् हुन् - केशवराज आचार्य (नेपाल राष्ट्र बैंकका पूर्व निर्देशक) । केशवराज-पुष्पाका तीन सन्तानमध्ये दुई छोरा हुन् - शिशिरराज र शरदराज । छोरी हुन् - सुम्निमा पहाडी ।

हामी पद्मनाथ-नेत्रकुमारीका माहिली छोरी हुन् - महालक्ष्मी पन्थी । यिनका श्रीमान् हुन् - कृष्ण पन्थी । कृष्ण-महालक्ष्मीका चार सन्तान हुन् - दुई छोरा माधव र अच्युत र दुई छोरीहरू ॠतु पौडेल र सबिना पन्थी ।

हामी पद्मनाथ-नेत्रकुमारीका कान्छी छोरी हुन् - परमेश्वरी पौडेल । यिनका श्रीमान् हुन् - झमन पौडेल । झमन-परमेश्वरीका एक छोरा छन् सुरज पौडेल ।

हामी दुवै जना बुढा-बुढी अशक्त र रोगले सताइएका । त्यसमा म चाहिँ दमको रोगी पनि । मधेस भैरहवामा जाडो याममा निकै ठन्डी हुने र गर्मी याममा उखरमाउलो चर्को गर्मी हुने । बरु पाल्पामा समशीतोष्ण जलवायु, श्रीनगरको काख, आफ्नै गैरागाउँ घरमा न ठिहिर्‍याउने ठन्डी, न त चर्को गर्मी । त्यसो हुनाले राम्रो स्वास्थ्यका लागि पाल्पा तानसेन गैरागाउँमा नै बसौं भन्ने सरसल्लाह गरेर हामी बुढा-बुढी बावु-आमा दुई-तीन वर्षदेखि गैरागाउँ घरमा बस्दै आएका छौं । पुरानो घरमा गाँसेर ओसारो कोठा र शौचालय पनि बनाइएको छ । यहाँ पनि ठूलो छोरा हरिकृष्ण सपरिवार बसेकै छ । बेला बखत माहिला छोरा शङ्कर र कान्छो छोरा विष्णु हामीलाई भेट गर्न भैरहवाबाट आइरहन्छ । दुःख बिमार पर्दा जाँच-औषधि गर्न मिसन हस्पिटल भुसलडाँडा पनि नजिकै छ । कुनै असजिलो महसुस भएको छैन । यसरी हामी दुवै जना ईश्वर चिन्तन गरेर धर्म अध्यात्म प्रति मन लगाउँदै जीवन गुजार्दै रहेका छौं ।

जीवनमा ८४ वर्षसम्म बाच्नु र चौरासी सिद्ध पूजा र सहस्र चन्द्र दर्शन साङ्गता यज्ञ गर्ने अवसर प्राप्त हुनु पनि सौभाग्यको कुरा हो । बुवा हीरानाथले चौरासी सिद्ध पूजा गर्नुभयो र दाजुहरूमा माइलदाजु कुलराजले चौरासी सिद्ध पूजा गर्नुभएको थियो । समयक्रमले मैले पनि चौरासी सिद्ध पूजा गर्ने दिन आयो । यस्तैमा छोराहरूले अब बुवाको चौरासी पूजा गर्नुपर्‍यो भनी कुरा उठाए । म विष्णुसँगै आफ्नै घर भैरहवामा बसेको थिए । विष्णु र ममताले पनि चौरासी पूजामा विशेष चासो राखे । ज्योतिषी पण्डितलाई ग्रहदशा जुराएर उपयुक्त दिन ठम्याइदिन अनुरोध गर्‍यौं । २०६८ साल मार्ग शुक्ल पूर्णिमाका दिन चौरासी पूजा गर्ने समय निर्धारण भयो । तदनुसार सामग्री जुटाएर पूर्व दिन मार्ग शुक्ल चतुर्दशीमा मण्डप निर्माण गरी भैरहवा घरमा पूर्वाङ्ग, दीप कलश गणेश पूजा, नवग्रह पूजा र आभ्युदयिक श्राद्ध आदि गर्‍यौं । दोस्रो दिन पूर्णिमाका दिन, षोडश कला सहित सहस्र चन्द्रमा पूजा, चौरासी कलशमा चौरासी सिद्ध पूजा, ग्रहयाग, पूजित देव देवीको नाममा आहूति हवन, रुद्री पाठ, तुलादान, शय्यादान, चन्द्र अर्घ दान, ब्राह्मण पूजा आदि सम्पूर्ण विधिहरू आफ्नो सामर्थ्य अनुसार सम्पन्न गर्‍यौं । यस यज्ञमा छोरी ज्वाईहरू, गैरागाउँका दाजुभाइहरू र काठमाडौंका भाइ भतिजाहरू पनि श्रद्धाका साथ सामेल भएका थिए । म यस

कर्ममा सुरुदेखि नै सपत्नीक भएर सबै पूजा-अर्चनामा संलग्न भएको थिएँ । चौरासी सिद्ध पूजा सम्पन्न गराउन श्रीमती नेत्रकुमारीको पनि विशेष भूमिका रहेको छ ।

२०७४ सालमा श्रीमती नेत्रकुमारी ८४ वर्ष पुगिन् । उनले २०६८ सालमा मसँगै सपत्नीक हैसियतले चौरासी पूजा गरेकी थिइन् । अहिले आफू पनि ८४ वर्ष पुगेकोले व्यक्ति तहबाट पनि सक्रिय रहेर चौरासी पूजा गर्ने धार्मिक अवधारणा राखिन् । त्यस बखत हामी दुवै गैरागाउँ घरमा बसेका थियौं । छोराहरूले पनि यस कार्यमा साथ दिए । २०७४ साल चैत्र शुक्ल पूर्णिमामा सपतिक भएर श्रीमती नेत्रकुमारीले विधिवत्, उक्त प्रकारले नै गैरागाउँ घरमा चौरासी पूजा सम्पन्न गरिन् । यस यज्ञमा पनि छोरी ज्वाईहरू, काठमाडौंका समेत भाइ भतिजाहरू, अन्य इष्टमित्रहरू सामेल भएका थिए । २०७५ साल आषाढमा पुरुषोत्तम मासका अवसरमा गैरागाउँ घरमा नै पुरुषोत्तम माहात्म्य अर्थसहित पाठ-पारायण ब्राह्मणद्वारा गराएर साङ्गता गरेको थिएँ । साङ्गताका दिन दाजुभाइ र गाउँका इष्टमित्रहरू पनि भेला भएका थिए ।

यातायात क्षेत्रको विकास गर्ने उद्देश्य अनुसार पाल्पा, तानसेन नगरपालिका वडा नं. १ गैरागाउँमा आउजाउ गर्ने भित्री सडकको विस्तार गर्ने अभियान थालियो । यस क्रममा हाम्रो बसोबास घर मुन्तिरको बारीबाट र घर माथिको खरबारीबाट पनि दुवैतर्फबाट मोटर चल्ने सडकका लागि जग्गा प्रदान गरेर विकास कार्यमा साझेदारी गरेका थियौं । घरकै पश्चिमपट्टिको जग्गामा कुलदेवताको मन्दिर पनि निर्माण गरियो । समाजसेवाको उद्देश्यले समाजसेवी भुयूमान र विश्वमानको अगुवाइमा धेरै वर्ष अगाडि गैरागाउँ भुसलडाँडा पाखोमा वृद्धाश्रम निर्माण गर्ने योजना ल्याइएको थियो । प्रक्रिया मिलाउन समय लाग्यो । भुयूमानको निधन पछि पनि हामीले यस कार्यका लागि अभियान कायमै राख्यौं । अन्ततः भुसलडाँडा कभर्ड हल (खेल भवन) भन्दा मास्तिर बाटामाथि वृद्धाश्रम भवन निर्माण कार्यले गति लिएको छ, पूरा हुँदैछ । यस कार्यका लागि पनि मैले चन्दा सहयोग स्वरूप सानो रकम रु. ५०,०००।- (पचास हजार) प्रदान गरेको थिएँ । गाउँ घरका अशक्तहरूलाई दुःख-पीर पर्दा र ओखतीमूलो गर्नुपर्दा सक्दो सहयोग पनि गर्दै आएका छौं ।

वि.सं. १९८४ मा मेरो जन्म भएको हो । अहिले म ९३ वर्ष पूरा भएर ९४ वर्षमा यात्रा गर्दैछु, पूज्य पिता हीरानाथ शर्माको जीवन-यात्राको अनुसरण गर्दैछु । यस परिप्रेक्ष्यमा पिता-पुर्खाको सम्झनालाई छोटोमा भए पनि अभिलेखीकरण गर्ने प्रयास गरेको हुँ । पुर्खाको नाममा लेखिएको यो कृति प्रातः स्मरणीय पिता-पुर्खामा नै समर्पण गर्दछु । भवतु सर्वमङ्गलम् ।

# पौरखी पुर्खाहरू

*✍ गोपीकृष्ण शर्मा*

श्रीवल्लभ थिए पुर्खा गुल्मीको चन्द्रकोटमा
बाग्लुङबाट आएका बस्थे भिर्खानी गाउँमा
जुहाङको नजिकै त्यो गाउँ देखिन्छ सुन्दर
उब्जाउ, रसिलो भूमि, खेतीयोग्य निरन्तर ।

(१)

श्रीवल्लभ उनैबाट जन्मेका तीन पुत्र ता
गजाधर थिए जेठा हीरानाथ त माहिला
दण्डपाणि त कान्छा हुन् अत्रिका गोत्रका थिए
थर गौतमका हुन् ती प्रेमका साथ बस्दथे ।

(२)

उन्नीस सय तेत्तीस सालमा जन्मने अघि
हीरानाथ थिए चाँडै रुद्री चण्डी पढे उनी
केही काम गरौं भन्ने उत्साह मनमा रह्यो
गाउँ छाडेर अन्यत्र जाने मनसुवा भयो ।

(३)

आफै खोजेर लिम्घामा केटीको घरमा गए
औंसीको तिथिको जन्म भएको यो कुरा बुझे
आफ्नो समेत औंसीको तिथिको जन्मले गरी
दुवैतर्फ बिहे गर्ने जुऱ्यो साइतको घडी ।

(४)

बिहे पछि उनी लागे पाल्पा तान्सेनतर्फ नै
चाकडीबाट नौसिन्दा पाए दर्बारभित्र नै
सोहेब्ज्यूको थियो राम्रो बन्दोबस्त त्यहाँ पनि
नीलो दर्बारमा बस्थे कारिन्दा काममा उनी ।

(५)

पहिलेदेखिका मान्छे चतुर्भुज खनाल हुन्
दर्बारमा उनैसाथ गएका काम गर्न हुन्
गैरागाउँ थियो बस्ती बसेको ठाउँ उर्वर
घरबारी किनी बस्थे हीरानाथ नयाँ घर ।

(६)

बजारको नजिकै त्यो गैरागाउँ छ सुन्दर
पूर्वतर्फ भुसल्डाँडा अस्पताल रह्यो पर

श्रीनगर छ है माथि डाँडो जो सेनवंशको
राजधानी थियो पैले प्रसिद्ध इतिहासको ।

(७)

नामविख्यात खातीको पनि त्यो वासभूमि हो
गुरु-पण्डितको नाम ती हीरानाथको रह्यो
धुवाघाट, बराङ्दीमा गहिरागाउँमा पनि
हीरु बाजे भनी नाम पुकार्थे जनले पनि ।

(८)

उनैबाट त जन्मेका पाँच छोरा सुनाम हुन्
रुद्रनाथ भए जेठा माहिला कुलराज हुन्
साहिँला हुन् दिनानाथ काहिँला रामनाथ हुन्
पद्मनाथ रहे कान्छा यी पाँच भाइ पुत्र हुन् ।

(९)

दण्डपाणि रहे भाइ बितेका हुन् युवा हुँदै
उनकै पुत्र हुन् प्यारा भतिजा भक्तिराम नै
छोरा नै हुन् भनी ल्याए हीरानाथ पितृव्यले
अंशियार सँगै राखी बनाए स्नेह-प्रेमले ।

(१०)

छ भाइ पुत्रका साथ हीरानाथ महागुणी
बस्थे आनन्दका साथ गहिरागाउँमा उनी
दिलाऊँ यी सबैलाई शिक्षा संस्कृतको भनी
काठमाडौं पठाएथे शास्त्री वा मध्यमा भनी ।

(११)

कुनै एक परीक्षाको पूर्णता सबले गरे
अङ्ग्रेजी तहको शिक्षा पाएथे पद्मनाथले
हुँगीको पाठशालामा पढाए रुद्रनाथले
जनता स्कूलमा चाहिँ पढाए कुलराजले

(१२)

संस्कृत देववाणीमा दीनानाथ पढाउँथे
भक्तिराम रामनाथ शिक्षा-सेवा नि गर्दथे
पद्म पब्लिक पाल्पाको हाइस्कूल गएर नै
निवृत्ति नहुँदासम्म पढाए पद्मनाथले ।

(१३)

पं. रुद्रनाथ हुन् जेठा ती गोपीकृष्णका पिता
पं. कुलराज हुन् दोस्रा ती दुर्गाराजका पिता

पं. भक्तिराम हुन् तेस्रा ती उमानाथका पिता
पं. दिनानाथ हुन् चौथा ती भूपनाथका पिता
(१४)
श्री रामनाथ हुन् पाँचौ कमलाका नि हुन् पिता
श्री पद्मनाथ हुन् छैटौं ती हरिकृष्णका पिता
जेठा छोराहरूका ती आएका नाम हुन् यहाँ
प्रायः छोराहरू आए छोरी एक रहिन् यहाँ ।
(१५)
धेरै सन्तान छौं हामी सन्तान एक-एकको
नाम मात्र परेको हो प्रतीक सब बन्धुको
धेरै हामी बसेकै छौं गहिरागाउँमा कति
काठमाडौं बसेका छौं केही सन्तान-सन्तति
(१६)
बाहिर जो बसेका छौं गहिरागाउँको जिमि
सम्झन्छौं र रहेकै छ बास त्यो ठाउँमा पनि
बेला-मौका सधैं जान्छौं प्रेमले घर बस्दछौं
जन्मभूमि छ यो हाम्रो माया र प्रेम गर्दछौं ।
(१७)
बुवा-बुवै दुवै हाम्रा रहे आनन्द साथमा
कान्ता देवी बुवै हाम्री वितिन् ती बीस सालमा
हीरानाथ बुवाले नै सय वर्ष जिएपछि
देहत्याग गरेको हो सैतीस सालमा पछि ।
(१८)
बुवाको परमायु हो सय र चार वर्षको
हाम्रो यो वंशमा धेरै बाँचेको शुभ भाग्य हो
सेतो दुबी थियो छाला बाहिरी भागमा कतै
काम्ने बानी थियो बस्दा बुढेस कालमा कतै
(१९)
वय उत्तरमा ठूलो यज्ञ सम्पन्नता भयो
हीरानाथ बुवाबाट महान् कार्य त्यहाँ भयो
कर्मेन्द्रिय सबै टाठा, आँखा-कान सफा थिए
देख्ने-सुन्ने दुवै काम राम्रैसँग हुँदा थिए
(२०)

हरे राम हरे राम राम राम हरे हरे
हरे कृष्ण हरे कृष्ण कृष्ण कृष्ण हरे हरे

कलितारक यो मन्त्र साढे तीन करोड नै
जाप र साङ्गता सारा बुवाबाट भयो सबै

(२१)

चौरासी वर्षका कान्छा पद्मनाथ समेतले
गरेको हो त्यही यज्ञ श्रद्धा र भक्तिभावले
हरे राम त्यही मन्त्र साढे तीन करोड यो
जपेर साङ्गता पूर्ण त्रिवेणी क्षेत्रमा भयो

(२२)

पौरखी पुरुखा हाम्रा चम्केथे नाम-कामले
ज्ञान शिक्षा र सन्देश दिएथे शुद्ध भावले
त्यही बाटो समाएर अरुको उपकारमा
लागौं सबै यही जो छौं मनले गर्छ प्रार्थना ।

(२३)

*(स्मृतिविम्ब, २०६७)*

# फोटो ग्यालरी



परिवारका साथमा पद्मनाथ





बुवा हीरानाथ शर्माको १०० औं वर्षको शुभजन्मोत्सव, शताब्दी रथारोहणका शुभ अवसरमा सपरिवार गाउँका इष्टमित्रहरूका साथमा भगवती मन्दिर परिसरमा



कान्छा छोराको परिवारका साथमा हीरानाथ



छोरा रुद्रनाथ र पद्नाथका परिवारका साथमा हीरानाथ



शिक्षक तथा विद्यार्थीका साथमा पद्मनाथ



शिक्षक तथा विद्यार्थीका साथमा पद्मनाथ



गैरागाउँ, खल्लुकधारास्थित नवनिर्मित पानी टचाङ्की र धाराको उद्घाटन गर्दै हीरानाथ, वि.सं. २०३२



गैरागाउँ, खल्लुकधारास्थित नवनिर्मित पानी टयाङ्की र धाराको उद्घाटन गर्दै हीरानाथ, वि.सं. २०३२



गैरागाउँ, खल्लुकधारास्थित नवनिर्मित पानी टयाङ्की र धाराको उद्घाटन गर्दै हीरानाथ, वि.सं. २०३२



गैरागाउँ, खल्लुकधारास्थित नवनिर्मित पानी टचाङ्की र धाराको उद्घाटन कार्यक्रम, वि.सं. २०३२



गैरागाउँ, खल्लुकधारास्थित नवनिर्मित पानी टचाङ्की र धाराको उद्घाटन कार्यक्रम, वि.सं. २०३२



पद्म पब्लिक हाइस्कुलका शिक्षक तथा विद्यार्थीका साथमा पद्मनाथ




९४ औं शुभजन्मोत्सवको शुभ अवसरमा परिवारका साथमा पद्मनाथ